अस्तरमा छापिएको मूर्तिकलाको प्रतिरूप यो दृश्य राजा शुद्धोदनको महलको हो, जसमा तीनजना भविष्यवक्ताहरूले भगवान बुद्धकी आमा, रानी मायाको सपना-लाई व्याख्या गरिरहेछन्। मुनिपट्टि बसेका छन् मुंशी जो व्याख्या दस्तावेज़ लेखिरेहछन्। संभवतः भारतमा लेखनकलाको यो सबैभन्दा पुरानो अनि चित्रंकित अभिलेख हो।

नागार्जुनकुण्ड, दोस्रो शताब्दी (क्राइश्टाब्द)
सौजन्य : राष्ट्रीय संग्रहालय, नयाँ दिल्ली

# जंगली हाँस

(नोर्वेजियन नाटक)

मूल

हेनरिक इब्सन

नेपाली अनुवाद

आर. पी. लामा




साहित्य अकादेमी

**Jungli Hans** : Nepali translation by
R. P. Lama of Ibsen's Norwegian drama *The Wild Duck*
Sahitya Akademi, New Delhi (1997), Rs. 50


प्रथम संस्करण : 1997

**साहित्य अकादेमी**

**मुख्य कार्यालय**

रवीन्द्र भवन, 35, फ़ीरोज़शाह मार्ग, नयाँ दिल्ली 110 001

**बिक्री केन्द्र**

स्वाति, मन्दिर मार्ग, नयाँ दिल्ली 110 001

**क्षेत्रीय कार्यालय**

172, मुम्बई मराठी ग्रन्थ संग्रहालय मार्ग, दादर, मुम्बई 400 014
जीवनतारा बिल्डिंग, चौथा तल, 23ए/44 एक्स, डायमंड हार्बर रोड,
कलकत्ता 700 053
304-305, अन्ना सालई तेनामपेट, चेन्नई 600 018
ए.डी.ए. रंगमन्दिर, 109, जे.सी. मार्ग, बंगलौर 560 002

मूल्य : पचास रुपये

ISBN 81-260-0253-0

लेज़र टाइपसेटिंग और मुद्रक : पवन ऑफसेट प्रिंटर्स, नवीन शाहदरा, दिल्ली 110 032

# पात्र-परिचय

| | | |
|---|---|---|
| **वर्ल** | : | एक ब्यापारी उदयोगपति |
| **ग्रेगर्स** | : | ब्यापारीको पुत्र |
| **एकदल** | : | एक बृद्ध |
| **हजलमार** | : | एकदलको पुत्र फोटोग्राफर |
| **गीना** | : | हजलमारकी पत्नी |
| **हेदविग** | : | गीनाकी चौदह वर्षीय पुत्री |
| **श्रीमती सूरबी** | : | वर्लकी नोकरनी |
| **रेलिंग** | : | एक डॉक्टर |
| **मौलविक** | : | एक पादरी |
| **ग्रावर्ग** | : | हिसाब किताब राख्ने व्यक्ति |
| **पेटर्सन** | : | वर्लका नोकर |
| **जेन्सन** | : | किरायमा राखिएको नोकर |

एक मोटा अतिथि, एक केश कम भएको अतिथि, एक कमजोर दृष्टि भएको अतिथि वर्लको भोजमा आमन्त्रित छ अन्य ब्यक्तिहरू र किरायमा ल्याएका केही वेटर।

पहिलो दृश्य वर्लको घर, शेष दृश्यहरू हजलमारको घर।

# पहिलो दृश्य

[ मिस्टर वर्लको घरमा अध्ययन कक्ष। अध्ययन कक्ष रुचिपूर्ण ढंगले औ सुविधासित सजाइएकोछ। पुस्तकका सुन्दर आलमिराहरू छन, सुन्दर चौकी र सोफाहरू सजाइएका छन्। कमराको बिचमा एउटा टेबल राखिएको छ। टेबलमा कागज र दस्तावेजहरू फिजाँएर राखिएको छ। बलिरहेको बत्तीहरूमा हरियो रंगको छाँया परेको छ। कमरामा धीमा प्रकाश छ। कुर्सीको पछि भित्तामा कब्जावाला दैलो छ। दैलो खुल्ला छ अनि पर्दा हटाइएको छ। दरवाजाभित्र एउटा ठूलो सजाइएको कमरा देखिन्छ। कमरामा तेज प्रकाश छ, केही बत्तीहरू र त्यसका पानसहरू कहीं-कहीं देखिन्छन्। अध्ययन कक्षको दाहिने पट्टिको भित्तामा पनि सानो दरवाजा छ। यो दरवाजा दफ्तरको हो। देब्रे पट्टिको भित्तामा राखिएको अगेनामा आगो झरझराँउदो थियो। यसको पछि कब्जावाला दैलाहरू छन जहाँबाट खानेकमरा देखिन्छ। मिस्टर वर्लका नोकर पेटरसनले उर्दी लाएको छ। किरायमा ल्याएको वेटर जेन्सन कालो सुटमा छ। यी दुवै अध्ययन कक्षका सामग्रीहरू मिलाँउदैछन्। ठूलो कमराका दैलोबाट पनि होटलका दुइ तीन वेटर कमरा सजाउने काममा, मम बत्ती जलाँउदै व्यस्त देखिन्छन्। खाने कमरामा आमन्त्रित व्यक्तिहरूको वातचीत तथा हास-परिहासका आवाजहरू सुनिन्छन्। फुटने गिलासमा ठोक्किएको चमेचको आवाज सुनिन्छ, स्तबधता छाँउछ, बुझिन्छ शुभकामनाको जाम (रोस्ट) प्रस्ताव गरिन्दैछ। समर्थनमा सबै उल्लासित छन्, और फेरि बातचीत शुरू हुन्छ, सबै खुशीको मुद्रामा छन् ]

**पेटर्सन :** (चिम्नीमाथि बत्ती बाल्छ अनि त्यो माथि छाया ढकना लाउँछ)— उनीहरूलाई ध्यानपूर्वक सुन, जेन्सन। बुढो मान्छे आफ्नो खुट्टा समातेर श्रीमती सोर्वी विषयमा लामो वगमफुसे कुरा गर्दैछ।

**जेन्सन :** (आराम चौकी अघि सार्दै)—के यो साँचो हो, मान्छेहरू के भन्छन्—के तिनीहरू असल साथीहरू हुन्, अहा।

**पेटर्सन :** भगवान जानुन्।

**जेन्सन :** मैले एउटा किस्सा सुनेकोछु—उ आफ्नो समयमा एक असल ग्राहक थियो।

**पेटर्सन :** हुन सक्छ।

जेन्सन : तिनीहरू भन्छन्—उसको छोरो आएको खुशियालीमा यो भोज दिइरहेछ।

पेटर्सन : अँ, उसको छोरा हिजो धरमा आएको छ।

जेन्सन : मि. वर्ली (वर्ल) को छोरा छ भनेर मैले त प्रथम पल्ट सुन्दैछु।

पेटर्सन : अँ, उसको जवान छोरो छ, तर उ डेक नचल्ने मान्छे छ तिमी यसो भन्न सक्छौ, उ यही होयदाल कारखानामा छ। म यहीं धेरै वर्षदेखि छु तर उ कहिले यो शहरमा आएन।

एक वेटर : (अर्को कमराको दैलोबाट हेर्दै)—पेटर्सन, यहाँ एक जना बुढ़ा आएकोछ अनि खोज्दैछ—

पेटर्सन : (गनगनाउँदै) नर पिशाच! को यहि बेला आउने? जतासुकै जावस, बुढ़ा, अब, यतिबेला आउनुको मतलब के छ?

*बुढ़ा एकदल भिन्न कमराबाट निस्कन्छ। उसको ओभरकोट पुरानो छ। कोट को कलर उठेको छ। हातमा लौरो, भुवादार टोपी र काखीमा कागजको बण्डल छ। उसको टाउको मैला रातो फुस्रो नक्कली केशले ढाकिएको छ। छोटो-छोटो सेतो जुँगा देखिन्छ।*

पेटर्सन : (एकदल पट्टि फर्केर) हे भगवान! तिमी यहाँ किन आयौ, के चाहियो!

एकदल : (दरवाजामा अढ़ेस लागेर) भाइ पेटर्सन! मलाई उता दफ्तरमा जानुछ, जरूरी काम छ।

पेटर्सन : दफ्तर एक घण्टा अघिनै बन्द भइसक्यो।

एकदल : हो यो त चौकीदारले पनि भनेको थियो तर ग्राबर्ग अहिले पनि दफ्तरमै छ। तिम्रो भलो होस भाइ पेटर्सन। म यहाँबाट जान्छु (दफ्तरको दैलो पट्टि संकेत गर्दै) मलाई दैलो याद छ, अधि पनि गएको हुँ।

पेटर्सन : हुन्छ भाइ, जानुहोस (दैलो खोलिदिन्छ)। तिम्रो जे काम भए पनि ठीक बाटोवाट निस्कनु। घणरमा पाहुना आएका छन्।

एकदल : ज्यू मलाई थाहा छ। भलो होस् तिम्रो पेटर्सन भाइ। तिमी बड़ो राम्रो मानिस छौ (मुख विस्तारै घुमाएर) नीच कहीं का।

*एकदल दफ्तरमा जान्छ। पेटर्सनले दैलो बन्द गर्छ।*

जेन्सन : तिनी के एक किरानी हुन्।

पेटर्सन : होइन, यहाँ कुनै नोकर छैन। ज्यादा काम परयो भने घरमै लगेर नकल गरेर ल्याउँछन्। आफ्नो समयमा एकदल निश्चयनै एक उत्तम मानिस हुँदो हो।

जेन्सन : त्यस्तै लाग्छ, राम्रो खाने लाउने घरको जस्तो देखिन्छ।

पेटर्सन : राम्रो खाने लाउने घरको? के भन्छौ तिमी, फौजमा लप्टन थियो।

जेन्सन : बाफ रे, फौजमा लप्टन थियो।

पेटर्सन : हो, तर उ व्यापारमा बिगऱ्यो। सुनिन्छ बुढो वर्लेलाई यिनले निकै झुक्क्याए को थियो। एक जमानामा होडालमा दुवैको साझेदारी थियो। बुढो एकदललाई म राम्ररी जान्दछु। मदर एरिकसनो हामी एक साथ बसेर पिउने गर्थ्यौं।

जेन्सन : अच्छा, यन्नो दम थियो यिनको!

पेटर्सन : भगवानले भलो गरोस् यिनको, म पनि यिनलाई पिउन दिन्थे। भनिन्छ मानिसको दिन फिरे, उसलाई त्यति पर्वाह गर्न हुँदैन।

जेन्सन : त्यसो भए यिनी के दिवाला भएको थियो?

पेटर्सन : होइन, दिवाला मात्रै कहाँ हो, जेल पुगेको थियो।

जेन्सन : जेल?

पेटर्सन : अरे जेल होइन भने, हाजतमा त... (ध्यानले सुनेर) ओ हो, साहबहरू उठदैछन्।

*दुइ जना वेटरले भोजनालयको दरवाजा खोलिदिन्छ। श्रीमती सूरबी दुइजना अतिथिहरूसित कुरा गर्दै आउँछिन्। उनको पछि अरू मानिसहरू सित मिस्टर वर्ल आउँछन्। अन्तमा हजलमार र एकदल औ ग्रेगर्स वर्ल एक साथ आउँछन्।*

श्रीमती सूरबी : (नोकर पट्टि हेरेर) पेटर्सन, कफी बैठकमा त्याउनु। त्यहाँ गाना हुँदैछ, कफी त्यहीं पिउँछौं।

पेटर्सन : हुन्छ हजुर।

*श्रीमती सूरबी, दुइ अतिथिसित भिन्नको ठूलो कमराको दाहिने पट्टि जान्छीन्। पेटर्सन र जेन्सन उनको पछि पछि जान्छन्।*

मोटा अतिथि : (पातलो केश भएको अतिथिलाई संबोधन गर्दै) उफ् कस्तो निमन्त्रणा, जति खाए पनि।

केश कम्ति भएको अतिथि : भाग्यमानी भए औ आँट भए तीन घण्टामा धेरै काम गर्न सकिन्छ।

मोटा अतिथि : हो भाइ, तर पछिबाट!

तेस्रो अतिथि : मेरो अनुमान, कफी र शराब गाउने समयमा बैठकमै आउँछ।

मोटा अतिथि : खुब राम्रो, त्यसो भए श्रीमती सूरबीले आज केही नयाँ चीज

सुनाउनेछन्।

अतिथि : **(शोर दबाएर)** सुनाउँछ त कुनै यस्तो गत नबजाओस् जसले पछिबाट अप्ठ्यारो नबनाओस्।

मोटा अतिथि : के भन्दैछस्, सूरबी यस्तो छैन। आफ्नो पुरानो मानिसहरूलाई दुःख दिँदैनन्। **(तीनै जना हाँस्दै ठूलो कमरामा जान्छन्)**

मि. वर्ल : **(चिन्ताग्रस्त भएर)** ग्रेगर्स, कसैले केही त भनेन।

ग्रेगर्स : **(पिता लाई हेर्दै)** किन, के भयो!

मि. वर्ल : के तैले पनि देखेनस्!

ग्रेगर्स : यस्तो के कुरा भो?

मि. वर्ल : कसैले केही भनेन? टेबलमा तेह्र मानिसहरू थिए।

ग्रेगर्स : के साँच्चैनै तेह्र थिए।

मि. वर्ल : **(हजलमार एकदल पट्टि हेरेर)** म सँधैनै बाह्रलाइ नै बोलाउथें। बाह्रनै मानिस हुन्थे **(अरू अतिथिहरूलाई हेर्दै)** आउनुहोस्, आउनुहोस्, तपाईहरू यता आउनुहोस **(वर्ल अतिथिहरूलाई बाटो देखाँउदै भित्रको कमरामा जान्छन्)** अतिथिहरू उनको साथ जान्छन्, हजलमार र ग्रेगर्समात्र बस्छन्।

हजलमार : **(उसले पिता-पुत्रको बात सुनेको थियो)** मलाई बोलाउन के आवश्यकता थियो। ग्रेगर्स, तिमीले मलाई त्यसै बोलायौ।

ग्रेगर्स : के भनेको, यो भोज मैरे लागी दिएको हो। मैले मेरो एक मात्र मित्रलाई नबोलाउनु!

हजलमार : मेरो विचारमा म यहाँ आएको तिम्रो पितालाई मन परेन। पहिले म कहिले यहाँ आएको थिइन।

ग्रेगर्स : तर म तिमीलाई भेटन चाहन्थे, केही कुरा गर्न चाहन्थे, मलाई झट्टै फर्केर जानु पनि छ। हामी पुराना साथीहरू कति टाड़ा टाड़ा गयौं, हगी। सोलह-सत्र साल बितेर गयो कहिले भेट पनि भएन।

हजलमार : हँ यत्रो वर्ष वितेर गयो!

ग्रेगर्स : हो त, अहिले के गर्दैछौं, दिन कसरी विताउँदैछौ, मजामा छौ होइन, तिमी मोटो भएको छौ।

हजलमार : हो, मोटा त होइन, शरीर भारी भएकोछ, त्यस समय कँटै थिएँ।

ग्रेगर्स : हो, हो किन होइन, तर शरीर त भारी भएकोछ होइन!

हजलमार : **(उदास भएर)** शरीर त भारी भएकोछ, साँच्चै ग्रेगर्स मनको कुरा के भनौं। मनको कुरा बेग्लै हो। साँच्चै भनुँ भने उसको कल्पना पनि गर्न सकिन्दैन। तिमीसित भेट भएन, तिमीलाई थाहा छ म माथि, हाम्रो परिवारमाथि कस्तो संकट आइलागेकृयो, वर्वाद

भयौं।

ग्रेगर्स : **(शोर दबाएर)** तिम्रो पिताजीको के हाल छ?

हजलमार : मित्र, ती कुराहरू छोड़ी दिनोस्। के हाल हुन्छ, मसितनै बस्छन्। म बाहेक दुनियाँमा उसको अरू को छ। उ कसको सहारामा बस्छ। ती कुराहरू छोड़ी दिनोस्। सम्झनासाथै मन नराम्रो भएर आउँछ। तिमी आफ्नो हाल चाल वताऊ। कारखानामा मन लगाएर काम गर्दैछौ।

ग्रेगर्स : हो धेरै शानदार एकान्त छ। सोच्ने तथा विचार्ने पुरा समय पाउँछ। अनि मैले धेरै कुराहरू सोंचे। आऊ, यहाँ आरामसित बस **(अंगेटीको सामने चौकीमा बसेर हजलमारलाई पनि छेउको चौकीमा तान्छन्)**

हजलमार : **(भावुकतासित)**, जे होस्, ग्रेगर्स तिमी प्रति म कृतज्ञ छु। तिमीले मलाई यहाँ बोलायौ, यसबाट मलाई विश्वास भयो कि तिमी म सित रिसाएको छैनौ।

ग्रेगर्स : **(आश्चर्यसित)** के भनेको, म तिमीसित किन दुःख मन गर्नु!

हजलमार : शुरूमा त तिमी रिसाएकै थियौ।

ग्रेगर्स : कहिले!

हजलमार : त्यस अभागी घटना पछि तिमी मसित रिसाउनु स्वाभाविकै थियो। यदि तिम्रो पिता त्यस मामलामा फँसेको भए! मुश्किलले बाँचे, कस्तो संकट थियो।

ग्रेगर्स : तर रिसाउने के कारण थियो? तिमीलाई यो विचार कसरी आयो?

हजलमार : होइन ग्रेगर्स, तर तिमी त्यस समय रिसाएकै थियौ, तिम्रो पिताजीले पनि भनेको थियो।

ग्रेगर्स : **(तर्सेर)** पिताजीले, उसले भन्यो, साँच्चैनै, ओ हो यसैले तिमीले मलाई पत्र पनि लेखेनौ, कहिले एक शब्द पनि लेखेनौ।

हजलमार : हो हो।

ग्रेगर्स : जब फोटोग्राफीको काम शुरू गर्‍यौ, खबर गरेको भए हुन्थ्यो। तर तिमीले त्यो समाचार पनि दिएनौ।

हजलमार : तिम्रो पिताले लेख्न भनाही गरेको थियो। केही लेख्ने जरूरत छैन भने।

ग्रेगर्स : हुन सक्छ उसको विचार ठीक हो। खैर, हजलमार, तिमी अहिलेको कुरा गर, अहिले सबै ठीकै छ? आफ्नो स्थितिसित सन्तुष्ट छौ?

हजलमार : **(अलिक गहिरो सास लिएर)** हो सबै ठीकै छ, म सन्तुष्ट छु।

शुरूमा अलिक अप्ठयारो लागेको थियो। तिमी आफै सोच्न सक्छौ, जीवनको ढंग एकदमै बदलेको थियो। तर जीवनको पुरानो ढंग चल्न सक्तैनथ्यो। पिताजीको सब कुरो स्वाहा भएको थियो। कलंक र लाजले मुख देखाइसक्नु थिएन।

ग्रेगर्स : (भावुकतासित) त्यो त हो, ठीकै भन्यौ।

हजलमार : पढ़ाइ जारी राख्न सम्भव थिएन। कौड़ी-कौड़ी स्वाहा भएको थियो। त्यस माथि पनि ऋणको बोझ। सबै भन्दा बेसी ऋण त तिम्रो पिताजीको थियो होइन।

ग्रेगर्स : हो।

हजलमार : मेरो लागी एउटै बाटो थियो। जीवनको पुरानो ढंग र पुरानो सम्बन्धको सँधैको लागी बिर्सी दिनु। तिम्रो पिताजीले पनि यही सल्लाह दिएका थिए। मैले त्यसै गरें त्यस समय मलाई दया गरेर मेरो सहायता गरेका थिए।

ग्रेगर्स : पिताजीले?

हजलमार : हो हो, बिलकुल, तिमीलाई थाहा छ। फोटोग्राफी सिक्ने खर्च कसरी पुरा हुन्थ्यो! स्टुडियो कसरी बनिन्थ्यो। तिमी आफै सोच, पैसा बिना केही हुन सक्तैन, तिमीलाई थाहा छ।

ग्रेगर्स : यो जम्मै खर्च पिताजीले दियो?

हजलमार : हो भाइ, तिमीलाई थाहा थिएन। उसले सबै कुरो तिमीलाई भन्यो होला भन्ने सोचेको थिएँ।

ग्रेगर्स : तिम्रो लागी केही गर्दैछ भनेर उसले कहिल्यै लेखेन। उसलाई याद नभएको होला। हामी पत्र छोटकरीमा लेख्छौं, खाली कारोबार विषय। त्यसो भए साँच्चैनै पिताजीले तिमीलाई सहायता गरयो।

हजलमार : हो हो भन्दै छु त। उसले यो कुरो कसैलाई भनेनन् तर सबै कुरो उसैको सहायताले भएको हो। उसैको दयाले मेरो घर पनि बाँचेको हो। तिमी सुनेर हैरान हुन्छौ कि म बाल-बच्चावाला हुँ।

ग्रेगर्स : यो मलाई कसरी थाहा हुने? (हजलमारलाई हातमा थामेर) भाइ, सुनेर मलाई खुशी लाग्यो। अनि केही अचम्भ पनि लाग्यो। पिताजीको बारेमा मेरो अरूनै धारणा थियो। तर स्वीकार गरें उनमा दया र सहृदयता रहेछ। उनलाई नैतिकताको विचार पनि रहेछ।

हजलमार : नैतिकताको विचार?

ग्रेगर्स : हो तिमी जे सुकै भन, पिताजीको बारेमा यो सब सुनेर मलाई कति खुशी लागेको छ। भाइ, तिमी त घर-बार वाला भइगयौ।

म त यस बारे केही सोच्न पनि सक्दिन। भन, तिमी विवाहसित सन्तुष्ट छौ?

हजलमार : धेरै सन्तुष्ट छु। पत्नी हेर्दा सुन्दा नराम्रो छैन, पढ़े लेखेकी तथा चतुर छे।

ग्रेगर्स : **(आश्चर्य मानेर)** पढ़े लेखेकी छे?

हजलमार : हो, तिमीले सम्झे सब भन्दा ठूलो शिक्षा त जीवनको अनुभव हुन्छ। मेरो कामकाजमा पनि सघाउँछे। हाम्रो धन्धा नै यस्तो छ, पढ़े लेखेको मानिससित काम पर्छ। साँच्चै तिमी छक्क पर्छौ, गीना धेरै बदूलिएकी छे।

ग्रेगर्स : गीना?

हजलमार : हो, तिमीलाई याद छैन, यही त उसको नाम थियो।

ग्रेगर्स : कुन गीना, मलाई त थाहा भएन।

हजलमार : के भुल्यौ! उ पहिला यही धरमा त काम गर्थी।

ग्रेगर्स : **(ध्यानपूर्वक हेरेर)** के गीना हेन्सन हो!

हजलमार : हो हो गीना हेन्सन हो।

ग्रेगर्स : जो माताजी बिमार हुँदा यहाँ काम गर्थी, उही।

हजलमार : ठीक ठीक, उही हो। तर मेरो अनुमान थियो कि मेरो विवाह सम्बन्धी पिताजीले तिमीलाई पत्र लेखेको हुनुपर्छ।

ग्रेगर्स : **(चौकीवाट उठ्दै)** हो अहिले याद आयो, पिताजीले केही लेखेको थियो **(चिन्तामग्न भएर)** हो सुन त, म बताउँछु। पिताजी पत्र सँधै छोटो लेख्छन् **(हजलमारको चौकीको हातमा बसेर)** हजलमार, म छक्क पर्दैछु, गीनासित तिम्रो परिचय कसरी भयो।

हजलमार : यो कुन ठूलो कुरो थियो। गीनाले यहाँ काम गर्न छोड़ेकी थिइ। तिम्रो आमाको बिमारको समय यहाँ धेरै गड़बड़ी र अन्यव्यवस्था थियो। गीनाले काम सम्हाल्न नसकेर काम छोड़ेर गएकी थिइ। तिम्रो माता स्वर्गवास भएको सायद एक वर्ष भएको थियो। होइन, त्यही वर्षको कुरा हो।

ग्रेगर्स : हो त्यही वर्षको कुरा हो। म कारखानामै थिएँ। त्यस पछि फेरि के भो?

हजलमार : हो, गीना आफ्नो आमाकहाँ फर्केर गएकी थिइ। उसकी आमा एकदमै परिश्रमी र समझदार थिइन्। उसको आफ्नो सानो होटल थियो। एउटा कमरा किरायमा दिने गर्थी। कमरा खुब सफा र आरामदायी थियो।

ग्रेगर्स : अनि यो कमरा सौभाग्यले तिमीले पायौ, होइन?

हजलमार : हो ठीक हो, वास्तवमा तिम्रा पिताजीले नै सल्लाह दिएको थियो। बुझ्यौ यस्तै प्रकारले गीनासित मेरो परिचय भयो।

ग्रेगर्स : परिचयबाट प्रेम भयो?

हजलमार : हो, सबैलाई थाहा छ, जवानीमा प्रेम हुन कति बेर लाग्छ।

ग्रेगर्स : **(चौकीको हातबाट उठेर फेरि घुम्न लाग्छ)** अच्छा, एउटा बात बताँऊ। गीनासित तिम्रो विवाह भइसके पछि तिमीले पिताजीलाई फोटोग्राफर हुने विचार बतायौ।

हजलमार : हो, ठीक भन्यौ। म निर्वाहका निम्ति केही धन्धाको खोजीमा थिएँ। तिम्रो पिताजी वा म आफैले पनि फोटोग्राफीको धन्धा असल सम्झयौ। गीनाको पनि यही विचार थियो। एउटा कारण अर्को पनि थियो। सौभाग्यले गीना एउटा फोटोग्राफरको दोकानमा अघि काम गरेकी थिइ। उसलाई ब्रुशको कामको केही अनुभव थियो।

ग्रेगर्स : यो त सबै दृष्टिबाट सौभाग्यको ठूलो संयोग भयो।

हजलमार : **(प्रसन्नतासित चौकीबाट उठ्दै)** निश्चयनै मेरो लागि सौभाग्यको ठूलो संयोग थियो।

ग्रेगर्स : ठीक हो, मान्छु। पिताजीनै तिम्रो भाग्यविधाता भयो।

हजलमार : **(उत्साहसित)** उसले आफ्नो पुरानो मित्रको छोरोलाई उसको संकटमा भुलेनन्। साँच्चै उसको मन कति उदार छ।

सूरबी श्रीमती : **(मि॰ वर्लको पाखुरामा हात राख्दै आँउछे)** वर्ल साहब, यो तपाईले के गर्नु भएको? हेर्नु भएन, यहाँ कति तेज रोशनी छ। आफ्नो आँखाको याद राख्नोस्।

मि॰ वर्ल : **(सूरबी श्रीमतीबाट हात हटाएर आँखामा राख्दै)** हो, यस रोशनीले मरो आँखामा धेरै तकलिफ दिरहेकोछ।

सूरबी श्रीमती : **(अर्को कमराका अतिथिहरूलाई सम्बोधन गर्दै)** कुनै साहब पंच **(चिनी-निम्बु मिलाएको शराब)** पिउनु इच्छुक भए, यता आउनुहोला, आउनुहोला, हाजिर छौ।

पातलो केश भएको अतिथि : **(सूरबी श्रीमती पट्टि आएर)** सिगरेट पिउने हाम्रो मानवीय अधिकार खोस्ने साँच्चैनै फैसला भइ सकेकोछ?

सूरबी श्रीमती . हो, वर्ल साहबको दरबारमा सिगरेट पिउनु निषेध छ।

पातलो केश भएको अतिथि : सूरबी श्रीमती, तमाखु निषेधको निर्दय र दमनकारी कानुन

कहिलेदेखि बनियो?

सुरवी श्रीमती : पछिल्लो निमन्त्रणाको बाद। त्यस निमन्त्रणामा अतिथिहरू यति लापरवाही भए कि त्यसको सीमानै छैन।

पातलो केश
भएको अतिथि : यदि आपत्ति नभए म पनि यस नियमको सीमा प्रति आँखा बन्द गरौं, अलिकति।

सूरवी श्रीमती : होइन वर्ल साहव, कुनै पनि सीमाको अतिक्रमण उचित हुँदैन। **(अरु अतिथिहरू पनि त्यसै कमरामा आँउछन् अनि नोकरहरू अतिथिहरूको अघि पंच प्रस्तुत गर्छन्)**

मि. वर्ल : **(मेजवाट हटेर उभिन्दै हजलमारलाई सम्बोधन गर्दै)** भन एकदल, त्यहाँ के हेर्दैछौ।

हजलमार : वर्ल साहब, म एकछिन अल्बम हेर्दैथिएँ।

पातलो वेश
भएको अतिथि : **(कमरामा चहल-पहल गर्दै)** यसमा फोटो छ होइन, यसमा तिम्रो रुची निश्चयनै हूनुपर्छ।

मोटो अतिथि : **(कुर्सीमा पस्रिएर)** आफूले बनाए को कुनै पनि तस्वीर ल्याएनौ!

हजलमार : अहँ।

पातलो केश
भएको अतिथि : लिएर आएको भए राम्रो हुन्थ्यो। खाएपछि तस्बीर हेर्नपाए हजम हुन सहायता पुग्थ्यो।

मोटा अतिथि : हो, पार्टीको दिल बहलावमा यसले सहायता गर्थ्यो। ठीक होइन।

कमजोर नजर
भाएको अतिथि : यहाँ सवै प्रकारको सहयोग सधन्यवाद स्वीकार गरिनुपर्छ।

सूरबी श्रीमती : मि. एकदल, यहाँहरूको विचार छ कि यस निमन्त्रणामा सम्मिलित हुने अतिथिहरूलाई आनन्द प्रदान गरी निमन्त्रणा पाउने हक अदा गर्नुपर्छ।

पातलो केश
भएको अतिथि : भाइ, यस्ता शानदान निमन्त्रणा पाए त यस्ता हक सौवार अदा गर्न सकिन्छ।

मोटा अतिथि : तब त भोजको निमन्त्रणा पाउनलाई यस्ता सहयोग दिनुमा जीवन-मरणको संघर्ष शुरू हुनेछ।

सूरवी श्रीमती : हो हो, तपाईले ठीक भन्नु भयो **(अतिथिहरू सवै हाँस्छन् र आपस्तमा बातचित गर्छन्)**

ग्रेगर्स : **(विस्तारसित हजलमारलाई)** हजलमार, तिमी पनि बातचीतको

रसपान गर न।

हजलमार : (आँखा झिम्क्याँउदै) मैले पनि बातचीत गर्नु!

पातलो केश भएको अतिथि : वर्ल साहब, तपाईको के विचार छ। म त भन्छु स्वास्थ्यको लागी 'तोके' अरू शराबभन्दा राम्रो हुन्छ।

मि. वर्ल : (अंगेटीपट्टि उभेर पीठ फर्काएर) आज जुन 'तोके' तपाईले पिउनु भयो, विश्वास दिलाउन सक्छु, यो एकदमै राम्रो फसल थियो। बताउने जरूरतनै छैन, तपाई आफैलेनै पिउनु भएकोछ।

पा. के. भ. अतिथि : हो साहब के भनौं, कति बढ़िया वासना थियो।

हजलमार : (संकोचमा मौन रहन्छ)

पा. के. भ. अतिथि : (हाँसेर) के भनौ, बड़ो राम्रो भन्नुभयो।

मि. वर्ल : (मुस्कुराँउदै) तपाईले हेर्नु भो, यस्ता बुद्धु मानिसहरूलाई राम्रो शराब दिनु, पैसा पानीमा बगाउनु मात्र हो।

मोटा अतिथि : मि. एकदल, 'तोके' को अगुंर र फोटोग्राफी दुवै धूपले बनिन्छ, होइन!

हजलमार : हो, यसमा केही सन्देह छैन। धूप र प्रकाश त बहुत जरूरी चीज हो।

श्रीमती सूरबी : कुनै त कुनै प्रकारले धूप र प्रकाश त सबैलाई चाहिन्छ। तपाईहरू पनि सरकारी कृपाले धूप र प्रकाशको सुविधा उठाइरहनु भएकोछ।

मोटा अतिथि : छोड़नुहोस्, के पुरानो मजाक गरि-रहनुहुन्छ!

कमजोर नजर भएको अतिथि : श्रीमती सूरबी आज खुशीमा छे।

कपालमा केश नभएको अतिथि : हामीलाईनै ठीक पार्दैछ, होइन श्रीमती सूरबी ?

श्रीमती सूरबी : हो, अरू एक कुरा पनि छ। फसल फसलको अंगुर र शराबमा भिन्नता हुन्छ। शराब जति पुरानो, उति राम्रो।

कमजोर नजर भएको अतिथि : हामी त तपाई पुरानोहरूमानै गिन्ती छ होइन?

श्रीमती सूरबी : होइन, छैन!

मोटा अतिथि : **(आश्चर्य मानेर)** अरे सुन्यौ तिमीले। तर श्रीमती सूरबी, म त पुरानोमै छु होइन!

पातलो केश
भएको अतिथि : अरे, हाम्रो गिन्ती कुन फसलमा छ?

श्रीमती सूरबी : अरे, तपाइँहरू दुवै रसिलो फसलमा हुनुहुन्छ।

*मुस्कुराँउदै पंचको ग्लास ओठँमा लाँउछे) अतिथि उसलाई खिसि गरेर हाँस्न लाग्छन्।*

मि॰ वर्ल : भाइ, श्रीमती सुरबी सित कुनै पनि प्रश्नको जवाब छ। तपाईहरू आफ्नो ग्लस किन राख्दै हुनुहुन्छ। पेटर्सन, यी ग्लासहरूमा अरू हाल। ग्रेगर्स, यहाँ आऊ। एक गिलास मसित पपिनु **(ग्रेगर्स निश्चल रहन्छ)** एकदल तिमी किन यता आँउदैनौ! मेजमा तिमीसित पिउन पाइन, अब त आऊ।

*मि॰ वर्लको मुनिम अर्को कमराको दरवाजाबाट हेर्छन्।*

ग्रावर्ग : हजुर, माफ गर्नुहोस्, उताबाट बाटोवन्द भएकोछ।

मि॰ वर्ल : किन तिमी फेरि बन्द भयौ?

ग्रावर्ग : हो हजुर, चपरासीले उताबाट तला लगाएर चाबी लगेछ।

मि॰ वर्ल : केही छैन, यताबाट निस्की।

ग्रावर्ग : हजुर, मसित अर्को एक जना मान्छे पनि छ।

मि॰ वर्ल : केही बात छैन, केही पर्वाह छैन। यताबाट निस्क, दुवै जना निस्क।

*ग्रावर्ग र बूढ़ा एकदल दफ्तरको दरवाजाबाट निस्कन्छन्। एकदललाई देखेर मि॰वर्लले आफ्नो दुःख लुकाउन सक्दैन। उसको मुखबाट निस्कन्छ—उफ्। कमरामा हास परिहास वन्द हुन्छ, स्तब्धता छाँउछ। हजलमार आफ्नो पितालाई देखेर छक्क पर्छ। आफ्नो ग्लास मेजमा राखेर मुख अंगेटी पट्टि धुमाँउछन्।*

बूढ़ा एकदल : **(गर्दन झुकाएर, घबराहटमा दाँगा-वाँया शिर झुकाएर गनगनाँउदै)** क्षमा गर्नुहोस्, क्षमा गर्नुहोस, गलत दरवाजामा आयौ। उता दरवाजा बन्द छ, ताला लागेको छ। क्षमा गर्नुहोस्।

*बूढ़ा एकदल र ग्रावर्ग अर्को दरवाजावाट निस्केर जान्छन्*

मि॰ वर्ल : **(दाँत किट्दै)** यो ग्रावर्ग बिल्कुल गधा हो।

ग्रेगर्स : **(आश्चर्यले ओठँ खोलेर औ आँखा फैलाएर हजलमारलाई सम्बोधन गर्छन्)** किन, उ तिम्रो···

पातलो केश

भएको अतिथि : के कुरा हो, उ को थियो?

ग्रेगर्स : केही पनि होइन, मुनिम थियो अनि अर्को मान्छे।

मोटा अतिथि : **(हजलमारलाई सम्बोधन गर्दै)** कोही तिम्रो परिचित थियो?

हजलमार : मलाई थाहा छैन, मैले देखिन।

पा. के. भएको
अतिथि : **(चौकीबाट उठ्दै)** कस्तो बदमाशी हो यो **(शोर दबाएर कुरा गर्दै गरेको अतिथिहरूको विचमा गएर कुरा सुन्न लाग्छन्)**

श्रीमती सूरबी : **(धीमा स्वरले नोकरलाई)** सुन, बूढ़ालाई घर लेजान केही दिनु। सुन, राम्ररी हेरेर दिनु।

पेटर्सन : **(स्वीकृतिमा शिर हल्लाँउदै)** भइ हाल्छ, हजुर **(नौकर जान्छ)**

ग्रेगर्स : **(विस्तारसित दिक्क मान्दै हजलमारसित)** किन, के उही थियो?

हजलमार : हो।

ग्रेगर्स : तिमीले त मुख फर्कायौ, अस्वीकार गरे, हेरेनन् पनि।

हजलमार : **(सुन्न सक्ने फुसफुसाहटमा)** अन्त, म के गर्न सक्थे?

ग्रेगर्स : आफ्नो पितालाई चिन्दैनस्?

हजलमार : **(खिन्नतासित)** तिमी मेरो जगहमा भए।

*अरू अतिथिहरू वातावरण बदली गर्नलाई ठूलो आवाजमा कुरा गर्न लाग्छन्*

मोटा अतिथि : **(ग्रेगर्स र हजलमारको छेउमा गएर आत्मीयताको मुस्कानसित)** कसो भाइ, कालेजका दिनहरूका पुरानो मित्रताको चर्चा हुँदैछ? लौ मि. एकदल, सिगरेट त लौ, माचिस चाहिन्छ, म दिऊँ, अरे भुलेछौं यहाँ सिगरेट पिउनु मनाही छ।

हजलमार : धन्यवाद, यस समय राम्रो हुँदैन।

पा. के. भएको
अतिथि : मि. एकदल, एउटा सानो र चुटकिलो गीत गाउन, तिमी त खुब गाँउछौ।

हजलमार : क्षमा गर्नुहोस्, अहिले मलाई केही याद छैन।

पा. के. भएको
अतिथि : के तिमीलाई याद छैन? त अब के हुनसक्छ, त अब के गरौं?

*दुवै अतिथि अर्को कमरामा जान्छन्*

हजलमार : **(उदास भएर)** ग्रेगर्स, अब म जान्छु। तिमीलाई थाहा छ मलाई के भएकोछ। जब कसैको भाग्य फुटछ भने, अच्छा, तिमीले मेरो तरफबाट साहबलाई नमस्ते र धन्यवाद भनिदिनु।

ग्रेगर्स : ठीक छ, ठीक छ, तिमी सिधा घर जान्छौ?

हजलमार : किन, के कुरा छ?

ग्रेगर्स : केही होइन सोच्दैछु, म पनि जाऊँ र तिमीलाई छोड़ेर आऊँ।

हजलमार : होइन केही जरूरत छैन भाइ। मेरोमा गएर के गर्छौ। ग्रेगर्स भाइ, मेरोमा त दुःख र उदासी मात्रै पाँउछौ। यति राम्रो निमन्त्रणापछि आफ्नो मन किन बिगार्छौ। मलाई भेटन शहरको कुनै पनि ठाँउमा सक्छौ, कहीं पनि भेटन सक्छौ।

श्रीमती सूरबी : **(हजलमार र ग्रेगर्सको छेउमा आएर धिमा स्वरमा)** एकदल, तिमी जादै छौ?

हजलमार : हो।

श्रीमती सूरबी : गीनालाई मेरो प्यार भन्दिनु।

हजलमार : धन्यवाद।

श्रीमती सूरबी : औ भन्दिनु, म उसलाई भेटन चाँडैनै आँउछु।

हजलमार : हुन्छ, भन्दिन्छु, धन्यवाद। **(ग्रेगर्स पट्टि फर्केर। तिमी पर्ख म चुपचाप निस्कन्छु (अर्को कमरामा जान्छन्)**

श्रीमती सूरबी : **(फर्केर गइरहेको नोकरलाई वोलाँउदै)** बूढ़ालाई घरमा लैजान केही दिएको थियो?

पेटर्सन : हो, ब्राण्डीको एक बोतल दिएको थियो।

श्रीमती सूरबी : वाह, अरू केही दिने पाएन?

पेटर्सन : हजुर, अरू के दिन, बूढ़ालाई ब्राण्डी भन्दा वेसी मन पर्ने अरू के छ?

पा॰ के॰ भएको

अतिथि : **(हातमा रागको स्वरलिपि लिएर दरवाजामा आँउछन्)** श्रीमती सूरबी, साथ दिन्छौ भने एउटा गीत गाऔं।

श्रीमती सूरबी : जरूर

अन्य अतिथि : वाह वाह, वाह वाह।

*अन्य अतिथि अर्को कमरामा जान्छन्। ग्रेगर्स अंगेटीको छेउमा उभिन्छ। मि॰ वर्ल मेजको छेउमा उभिएर केही खोज्दैछन्। ग्रेगर्स जाने प्रतीक्षामा छ। ग्रेगर्सलाई नगएको देखेर मि॰ वर्ल दरवाजा तिर जान्छन्।*

ग्रेगर्स : पिताजी, पर्खनोस्।

मि॰ वर्ल : (रोकिएर) किन, के भो?

ग्रेगर्स : म तपाईसित केही कुरा गर्न चाहन्छु।

मि॰ वर्ल : तब, एक छिन पर्खनु, अतिथिहरूलाई जान देऊ।

ग्रेगर्स : होइन पिताजी, अहिले भन्न चाहन्छु, फेरि मौका पाँउछु

पाँउदिन।

मि. वर्ल : (पुत्रपट्टि आएर) किन, के भन्न लागेको छौ?

*यसको पछि वार्तालापको समय अर्को कमराबाट पियानोको धिमा आवाज सुनिन्छ।*

ग्रेगर्स : तपाईलाई थाहा छैन त्यस परिवारको स्थिति कति दयनीय भइ सकेकोछ।

मि. वर्ल : बूढ़ा एकदलको कुरा गर्दैछौ?

ग्रेगर्स : हो उसकै कुरा गर्दैछु, लेफ्टीनेन्ट एकदलसित तपाईको गहिरो मित्रता थियो।

मि. वर्ल : हो दुर्भाग्यले मित्रता निकै गहिरो थियो। यही मित्रताको अपराधको दण्ड वर्षौ भोगी रहेछु। उसैको कृपाले म पनि बदनामी र कलंक भोगी रहेछु।

ग्रेगर्स : (धीमा स्वरमा) के सबै अपराध वास्तवमा उसैको थियो?

मि. वर्ल : तिमीले के सम्झेको छौ, अरू कसको थियो?

ग्रेगर्स : काठ-बिक्री को ठीकामा तपाई दुवै साझेदारी हुनुहुन्थ्यो।

मि. वर्ल : तर तिमीलाई थाहा छ त्यो जंगलको नक्सा उसैले बनाएको थियो। यही नक्साबाट झगड़ा शुरू भयो। सरकारी रूखहरू काटने अपराधको उत्तरदायित्व उसैमाथि थियो। वास्तवमा पुरा मामलाको उत्तरदायित्वनै उही माथि थियो। उसले के गर्दै थियो मलाई थाहा थिएन।

ग्रेगर्स : तर यस्तो लाग्दछ कि बूढो आफैलाई पनि उसले के गर्दैछ सो थाहा छैन।

मि. वर्ल : कसले जान्ने, तर तथ्य यो छ कि अदालतले उसलाई अपराधी ठहरायो अनि मलाई निर्दोष।

ग्रेगर्स : हजुर, मलाई पनि थाहा, मामलाको पुरा सवुत पाइएन।

मि. वर्ल : जसलाई अदालतले छुटकारा दियो, उसले छुटकारा पायो। तिमी त्यो पुरानो घिनलाग्दो कुरामा किन परेशान छौ? यही परेशानी ले यो उमेरमा मेरो केश सेतै भयो। त्यहाँ कारखानामा वर्षोदेखि तिमी यही सोची रहेछौ। तर ग्रेगर्स, भरोसा राख, जहाँसम्म मेरो नामको प्रश्न छ, मानिसले ती सब कुराहरू भुलिसकेका छन्।

ग्रेगर्स : तर त्यो दुःखी परिवारको के हुन्छ?

मि. वर्ल : तिमी भन, उसको लागी म के गर्न सक्थें? एकदल जब जेलबाट छुटेर आएको थियो, उसको हालत यस्तो थियो कि सहायता

दिएर पनि केही नहुने। कुनै मानिसमा साहस नै हुँदैन। साधारण कठिनाइमा पनि हताश हुन्छन्। आफ्नो खुट्टामा उभिन सक्तैनन्। एक पटक चिप्ले त्यो सँधैको लागी गए। ग्रेगर्स साँच्चै भनौ भने मैले उसको लागी जो गरें, त्यो भन्दा बेसी सहायता गर्न सम्भव थिएन। अन्यथा, जम्मै दोष मैमाथि आउने, मानिसहरूले मै माथिनै औंली उठाउने, सन्देह गर्ने।

ग्रेगर्स : सन्देह! ठीक हो।

मि. वर्ल : एकदललाई मैले दफ्तरमा कागजको नकल बनाउने काम दिएकोछु। जति हुन्छ त्यो भन्दा बेसीनै दिन्छु।

ग्रेगर्स : (**पिताबाट आँखा बचाएर**) हो, यसमा केही सन्देह छैन।

मि. वर्ल : तिमी हाँस्दैछौ? सायद तिमीलाई मेरा कुरामा विश्वास लागेन। म जान्दछु खातामा उसको हिसाब छैन। यसरी खर्च हिसाबमा राखिन्दैन पनि।

ग्रेगर्स : (**मुस्कानसित**) हो जान्दछु, यस्तो खर्च बहीखातामा लेखिन्दैन।

मि. वर्ल : (**छक्क परेर**) तिम्रो मतलब के छ?

ग्रेगर्स : (**गम्भीरतासित**) तपाईले हजलमार एकदललाई फोटोग्राफी सिक्नलाई जुन खर्च दिनुभो त्यो कुनखातामा देखाउनु भयो?

मि. वर्ल : त्यो खर्चलाई खातामा देखाउने मतलब के थियो?

ग्रेगर्स : मलाई थाहा छ खर्च उसलाई तपाईलेनै दिनु भएको थियो। मलाई यो पनि थाहा छ कि स्टुडियो बनाउने खर्च पनि तपाईले दिनु भएको थियो।

मि. वर्ल : तिमीलाई यी सबै कुराहरू थाहा रहेछ, फेरि किन भन्छौ मैले केही गरेन भनेर। साँचै भनौ भने उनीहरूको लागीनै मैले धेरै खर्च र परेशानी उठाउनु परयो। कर्त्तव्य सम्झेर गर्छु।

ग्रेगर्स : खातामा कंही यो हिसाब देखाइएकोछ?

मि. वर्ल : तिमी यो कुरा किन सोछदैछौ?

ग्रेगर्स : एक कारण छ। बताउनुहोस्, तपाईले पुरानो मित्रको छोरोलाई सहायता दिने चिन्ता तब भयो जब उ विवाहको तयारी गर्दैथियो।

मि. वर्ल : हे भगवान, यति पुरानो बात, मलाई कसरी याद।

ग्रेगर्स : तपाईले मलाई त्यसै लेख्नु भएको थियो। पत्र कामकाजको सम्बन्धमै थियो। तर पत्रको अन्तमा दुइ-तीन शब्द यसै सम्बन्धमा थियो। तपाईले पत्रको अन्तमा लेख्नुभएको छ हजलमार एकदलले मिस हेन्सनलाई विवाह गरे भनेर।

मि वर्ल : हो ठीक हो, यही उसको नाम थियो।

ग्रेगर्स : तर तपाईले त लेख्नु भएन कि मिस हेन्सन हामो पुरानो नोकरनी गीना हेन्सन हो भनेर।

मि. वर्ल : **(व्यंग हँसाइ रोक्दै)** लेखे होला। मलाई के थाहा कि पुरानी नोकरनीको तिमीलाई यत्रो चिन्ता छ भनेर।

ग्रेगर्स : ठीक छ, मलाई चिन्ता थिएन तर **(शोर दवाएर)** यही घरमा कसैको धेरै चिन्ता थियो।

मि. वर्ल : के मतलव हो तिम्रो। **(अलिक रिसाएर)** तिमी मलाई भन्दैछौ?

ग्रेगर्स : **(दबिएको तर दृढ़ स्वरमा)**—हो, तपाईको अभिप्राय हो।

मि. वर्ल : तिम्रो यत्रो साहस, तिमी यति ठूलो भयौ औ त्यो कृतघ्न फोटोग्राफरको यत्रो आँट यही घरमा आएर, मेरै लाच्छणा।

ग्रेगर्स : हजलमारले त कहिले पनि यस्तो कुरा भनेन। मलाई आशा छ, उसलाई केही सन्देह छैन।

मि. वर्ल : तिमीलाई के विचार आयो तब। आखिर यस्तो कुरा तिमीलाई अरू कसले भन्न सक्छ?

ग्रेगर्स : मेरी गरीब दुखिया आमाले मलाई भनिन्।

मि. वर्ल : तिम्री आमाले, हो मेरो पनि अनुमान यही थियो, तिम्री आमाले भनी। तिमी दुइ सँधै मेरो विरुद्ध छौ। तिमी सँधै उसको कुरामा रहयौ। मेरो विरोधमा तिमीलाई सँधै तिम्री आमाले भड़काइन्।

ग्रेगर्स : होइन, यो कुरो होइन। उसले दुःख र अपमान सही यसैले उसको दुःखपूर्ण अन्त भयो। त्यही दुःख र अपमानलेनै उसलाई विगार्‍यो।

मि. वर्ल : के भन्दैछस्? उसले के दुःख र अपमान सही। उसको जीवन अरू स्त्रीहरू सरहनै थियो। सँधै विमार रहने, विग्रेको दिमाग, रिसाएको मानिससित कहिलेसम्म बस्ने। भोग्ने मानिसलाईनै थाहा छ। तिमी ब्यर्थैमा यस कुरोमा टाउको दुखाँउछौ। आफ्नो पिताको विरोधमा अफवाह सुनेर किसिमका कुरा गर्छौ। सुन ग्रेगर्स तिम्रो उमेर यो सब बात सुन्ने होइन। यो उमेरमा तिम्रो लागी धेरै कुरा गर्नुछ।

ग्रेगर्स : हो, म पनि सम्झन्छु। मैले केही उपयोगी काम गर्नुपर्छ।

मि. वर्ल : बिलकुल ठीक, तिम्रो ध्यान ठीक दिशामा लगाए, तिमी व्यर्थको झन्झटदेखि परेशान हुँदैनौ, तिम्रो मन पनि शान्त रहन्छ। वर्षौदेखि कारखानामा काम गर्ने साधारण क्लर्कहरू जस्तो टाउको दुखाँउछौ। त्यसमा के फायदा छ। क्लर्कको तलब लिदैछौ। आफ्नो तलब पनि बढ़ाउन दिदैनौ। यो मूर्खना

नभए के हो?

ग्रेगर्स : हो, तर यो तपाईको विचार हो, मैले यस्तो सम्झेको छुइन।

मि॰ वर्ल : म तिम्रो मतलब बुझछु। तिमी आफ्नो खुहामा खड़ा हुन चाहन्छौ। तिमी मबाट कुनै सहायता वा आभार चाहदैनौ। खैर, तिमी जस्तो चाहन्छौ। तिमीले इच्छा गरे एउटै उपायले तिमी पूर्णतः स्वतन्त्र औ आत्मनिर्भर पनि बन्न सक्छौ।

ग्रेगर्स : साँच्चैनै, त्यो कस्तो उपाय हो।

मि॰ वर्ल : एउटा अत्यन्त आवश्यकले गर्दा तिमीलाई तुरन्त मैले यहाँ आउन लेखेको थिएँ।

ग्रेगर्स : ज्यू, तपाईले मलाई कुन कारणले बोलाउनु भएको थियो, मलाई बताउनु भएको छैन। विहानदेखि त्यसैको प्रतीक्षामा छु।

मि॰ वर्ल : म चाहन्छु कि तिमी कम्पनीमा साझेदारी भइ हाल।

ग्रेगर्स : म तपाईको कम्पनीमा साझेदारी बनुँ?

मि॰ वर्ल : हो, तर साझेदारी भएपछि एक साथ बस्नुपर्छ भन्ने छैन। तिमी यहाँ शहरमा बसेर दफ्तरको काम सम्हाल्नु। म गएर कारखानाको हेर्चाह गर्छु।

ग्रेगर्स : तपाई कारखानामा जानुहुन्छ।

मि॰ वर्ल : हो तिमी देख्दैछौ मेरो स्वास्थ्य अघि जस्तो छैन। ग्रेगर्स, अब म अघि जस्तो काम गर्न सक्तिन। मेरो आँखाको उपेक्षा गर्न सक्तिन। मेरो दृष्टि खराब हुँदै जाँदैछ। आँखालाई ध्यान दिन आवश्यक छ।

ग्रेगर्स : तपाईको आँखा त अघि पनि खराब थियो।

मि॰ वर्ल : होइन, अघि यति खराब थिएन। अरू पनि कति परिस्थितिहरू छन् जसले गर्दा म उहीं बस्नुपर्छ। कम से कम म केही समयको लागी जान चाहन्छु।

ग्रेगर्स : मलाई त यस्तो केही विचार थिएन।

मि॰ वर्ल : सुन ग्रेगर्स, कति कुरामा हामी दुईको रूची मिल्दैन तर हाम्रो पिता पूत्रको सम्बन्ध छ। मेरो विचारमा यो उचित हुन्छ कि जसरी भए पनि हामी परस्पर बाँच्नुपर्छ।

ग्रेगर्स : मेरो विचार छ, तपाई दुनियाँदेखि बाँच्नलाई यो भन्नु हुँदैछ।

मि॰ वर्ल : अच्छा, तिमी दुनियाँदारीको विचारलेनै सम्झ। सही नै छ। ग्रेगर्स तिमी यस विषयमा सोच्नु। किन, तिमीलाई यस विषय कुनै कठिनाई हुन्छ? भन।

ग्रगर्स : (रूखो भएर) मलाई तपाईको कुरामा केही रहस्य लुकेको छ जस्तो

लाग्छ।

मि. वर्ल : किन, तिम्रो के मतलब छ?

ग्रेगर्स : मलाई यस्तो लाग्दैछ, तपाई मबाट केही काम निकाल्न चाहनुहुन्छ।

मि. वर्ल : सुन जुन दुइ व्यक्तिमा परस्पर गूढ़, हाम्रो जस्तो सम्बन्ध छ, उनीहरू सँधैनै एक अर्काको काममा आउनुपर्छ।

ग्रेगर्स : ज्यू, हुनसक्छ।

मि. वर्ल : म चाहन्छु तिमी केही दिन मसित धरमै बस। मेरो अरू को छ ग्रेगर्स। म जन्मभर एक्लै रहें। अब एक्लोपन मेरो लागी असहाय भयो। म अव बूढ़ा हुन लागेको अनुभव गर्दैछु। मलाई साथी र सहाराको आवश्यकताको अनुभव हुनलागेकोछ।

ग्रेगर्स : श्रीमती सूरबी छ त तपाईको साथ।

मि. वर्ल : हो, ठीक भन्यौ। साँचै भनौ भने उ बिना मेरो निर्वाह हुँदैन। बड़ो समझदारी छ मन सफा छ, बनावटी गर्दैन। उसैले गर्दा घर बसेको छ जस्तो लाग्छ। नत्र भने यो घरले मलाई सताँउथ्यो।

ग्रेगर्स : तपाई ठीक भन्दै हुनुहुन्छ। मेरो विचारमा तपाई जे चाहनुहुन्छ, तपाईको अघि छ।

मि. वर्ल : हो तर के भरोसा, कहिलेसम्म यस्तो चल्ने।" मानिसहरू तरह तरहको झूठो बातहरू गर्छन्। यस्तो स्थितिमा एउटी स्त्री कहिलेसम्म बस्नु सक्छ? स्त्री मात्रै किन पुरुषको पनि त बदनामी हुन थाल्छ।

ग्रेगर्स : वाह। यदि मानिसको स्थिति राम्रो छ, तपाईले जस्तो शानदार निमन्त्रणा दिन सके फेरि जनमतदेखि डराउने जरूरत नै छैन।

मि. वर्ल : हो हुनसक्छ! ग्रेगर्स, उसको पनि त ख्याल राख्नुपर्छ। सोच, यो स्थितिमा कहिलेसम्म बस्नुसक्छ उ। उसलाई पनि बदनामी को डर छ। यदि मेरोप्रति आदरले बा मेरो ख्याल गरेर उसले झूठो अफवाह वा बदनामीको नगरे पनि, ग्रेगर्स तिमीलाई त न्याय अन्यायको बहुत विचार रहन्छ। तिमी भन मैले उसको चिन्ता नगर्नु उचित ठहर्ला।

ग्रेगर्स : गुलमालका कुरा छोड़नुहोस्। तपाई भन्नुहोस, उसलाई विहे गर्न चाहनुहुन्छु?

मि. वर्ल : खैर, तिमी सम्झ म चाहन्छु, तब के?

ग्रेगर्स : अनि, ठीक छ।

मि वर्ल : तिमी त्यस स्थितिलाई असह्य त सम्झन्दैनौ?

ग्रेगर्स : यस्तो के कुरा हुन्छ? म त यस्ता कारणहरू जान्दिन।

मि. वर्ल : त्यसो भए ठीक छ। मलाई केही डर थियो। मलाई शंका थियो सायद तिमीले आफ्नो आमाको स्मृति प्रति अनादर...

ग्रेगर्स : ज्यू, म यस्तो भावुकतामा पर्दिन।

मि. वर्ल : ठीक छ, तिमी भावुक बन वा नबन, तर तिमीले मेरो मनको चिन्ता हटायौ। मलाई यस कुरोमा सन्तोष छ कि यस सम्बन्धमा तिम्रो सहानुभूतिमा म निर्भर गर्न सक्छु।

ग्रेगर्स : **(पितालाई धुर्दै हेरेर)** अब मैले सम्झें, तफाईले मबाट यही काम निकाल्ने इच्छा गर्नु भएको हो।

मि. वर्ल : तिमीबाट काम निकाल्न चाहन्छु? तिमी कस्तो कुरा गर्दैछौ?

ग्रेगर्स : ओहो। शब्दको सम्बन्धमा यति गर्ने के जरूरत थियो। अरू कसैले सुनेको छैन **(अलिकता हाँस्दै)** अब मैले कारण सम्झें। मलाई शहर आउनु यसैले नितान्त आवश्यक थियो कि तपाई सूरबी श्रीमतीको सन्तोकको लागी पारिवारिक जीवनको आडम्बर रच्न सकोस्। पिता-पुत्रको स्नेह र विश्वासको भावुक दृश्य दर्शाउन सकोस्। एउटा एकदमै नयाँ उदाहरण।

मि. वर्ल : तिमी मसित कस्तो कुरा गर्दैछौ?

ग्रेगर्स : तपाई भन्नुहोस्, यहाँ पारिवारिक जीवनको वातावरण कहिले थियो। मैले थाहा पाएसम्म मैले कहिले देखिन। खैर यदि यसले तपाईलाई सन्तोक हुन्छ भने, त्यसको केही आभास बनाउन सकिन्छ। छोरो पिताको विवाहमा सम्मिलित हुन तथा पिताप्रति श्रद्धा जनाउन घरमा दौड़ेर आएको नाटक रचाउन सके मानिसहरूमा राम्रो प्रभाव पर्ने थियो। यसलाई अस्वीकार गर्न सकिन्दैन। मानिसहरूले स्वीकार गर्नेछन् कि मेरी आमा दुःखले वा मनको पिरले जीवन समाप्त गरेको अफवाहहरू व्यर्थको झूठो थियो। मेरो व्यवहारले ती सब अफवाहहरूको निराकरण स्वयं हुनेछ।

मि. वर्ल : ग्रेगर्स, मलाई त यस्तो लाग्छ कि संसारमा तिम्रो सबैभन्दा ठूलो शत्रु मै हो।

ग्रेगर्स : **(स्वर दबाएर)** कारण यो कि म तपाईको वास्तविकता जान्दछु।

मि. वर्ल : तिमीले तिम्रो आमा सम्बन्धी मेरो जो धारणा बनाएको छौ **(स्वर सानो पारेर)** तर तिमीले याद राख्नुपर्छ कि तिम्रो आमाले मेरो सम्बन्धमा कहिले काँही गल्ती धारणाहरू सोच्थीन्।

ग्रेगर्स : **(अलिक काँपेर)** म तपाईको अभिप्रायः बुझछु। तर आमाको

त्यस्ता व्यवहारको लागी को जिम्मावार थिए? तपाई, तपाईको, कति अनि ती स्त्री पनि।

मि. वर्ल : **(उद्विग्नताले काँध झटकाएर)** बिलकुल हो, त्यही कुराहरू जस्तो तिम्री आमाले गर्थिन्।

ग्रेगर्स : **(पिताको उपस्थितिको उपेक्षा गर्दै मुख फर्काएर)** अब चारै तिर खड़ा भएको सम्पूर्ण षाड़यन्त्रमा कसरी सरल र तटस्थ भएकोछ। घरमा पनि एक रखेल राखेको छ। यही परिवार, यही घर हो? यो सब धोखा र हो **(पितापट्टि एक कदम बढ़ाएर)** तपाईको वितेका घटनाहरू सम्झन्दा शरीर काँप्छ। कल्पनामा युद्धको मैदान देख्छु जहाँ वर्बाद जीवनका लासहरू थुप्रिएकाछन्।

मि. वर्ल : म यो निष्कर्षमा पुगेको छुकि तिम्रो र मेरो समझमा जमीन आसमानको फरक छ। यसमा कुनै प्रकारको समन्वय सम्भव छैन।

ग्रेगर्स : **(पिताप्रति आदर देखाउन आफ्नो क्षोभलाई वशमा गरेर अलिक शिर झुकाँउदै)** म तपाईसित एकदमै सहमत छु। यसैले मलाई विदा दिनुहोस्। म सँधैको लागी जाँदैछु।

मि. वर्ल : जाँदै छौ, घर छोड़ेर जाँदैछौ?

ग्रेगर्स : हो, मैले मेरो जीवनको लागी अर्को ध्येय निश्चित गरेकोछु।

मि. वर्ल : त्यस्तो त्यस्तो ध्येय हो?

ग्रेगर्स : सुनेर तपाई हाँस्नु हुन्छ।

मि. वर्ल : ग्रेगर्स, का जस्तो दुःखी अभागी के हाँस्छ, मेरो को छ?

ग्रेगर्स : **(ठूलो कमरापट्टि संकेत गर्दै)** त्यहाँ हेर्नुहोस् पिताजी, सूरबी महोदया तपाईका अतिथिहरूसित आँखमिचौली खेल्दैछन्। मलाई आज्ञा दिनुहोस् विदा।

*ग्रेगर्स कमराबाट जान्छ, अतिथिहरू हाँस्दै त्यही कमरामा आँउछन्।*

मि. वर्ल : **(क्षोभले ग्रेगर्स प्रति दाँत किट्दै)** हा हा हा, अचम्भको केटा छ अनि भन्छ—म भावुक छुइन।

□□□

# दोस्रो दृश्य

[ हजलमार एकदलको स्टुडियो प्रकाशको सुबिधाको लागी एउटा राम्रो ठूलो सजाइएको कमरा बनाइएको। कमराको दाहिने भागको छाना अलिक ढल्किएकोछ। छानाको त्यस भागमा ठूल्ठुलो ऐनाको खिड़की छ। खिड़कीको आधा भाग निलो पर्दाले ढाकिएको छ। कमरामा आउने दरवाजा दाहिने हातको कुनामा छ। त्यतै पट्टिको भित्तामा ससाना बैठकको लागी दरवाजा छ। देब्रे पहिको भित्तमा दुइवटा दरवाजा छ। दुवै दरवाजाको को विचको भित्रामा अग्लो (अँगिठी) छ। पछिको भित्रामा चौड़ा दरवाजा छ। यो दरवाजाको किवाड भित्तामा दाहिने देब्रे ठेल्न सकिन्छ। स्टुडियोको सजावट साधारण छ तर सुविधाको व्यवस्था छ। दाहिने पट्टि दुवै दरवाजाको विच भित्तासित एउटा सोफा छ। सोफाको छेउमा एउटा सानो टेबल र केही चौकी छ। टेबलमा एउटा लेम्प छ। लेम्प सेडले ढाकिएको छ र त्यसबाट मधुरो प्रकाश फैलिएको छ। अँगेठीको छेउमा हात भएको चौकी छ। कमराको यत्र-तत्र केमरा र फोटोग्राफीको अरू उपकरणहरू छन्। पछिल्लो भित्ताको साथ लागेको देब्रे पट्टि किताब राख्ने आलमारी छ। आलमारीमा केही किताव छ, केही डिब्बा छ, केही रासायनिक पदार्थका बोतलहरू छन् र केही औजार पनि छन्। टेबलमा केही फोटोग्राफ केही कागज, चित्रकारको ब्रुस र फोटोग्राफीमा उपयोग हुने अन्य वस्तुहरू छन्। टेबलको छेउको चौकीमा बसेर गीना एकदल लुगा सिलाउँदैछे। हेदविग सोफामा सुतेर एउटा पुस्तक पढ़दैछे। दुवै औंठी कानमा लगाएर हातको आड़ले आँखालाई प्रकाशदेखि बचाइ राखेकीछ।]

गीना : **(हेदविग पट्टि कति चोटि छड़के नजर ले हेर्छे। उसको अनुहारमा केही चिन्ताको भाव छ। इच्छा नभएर पनि उ बोल्नुपर्छ)** हेदविग।

*हेदविग सुन्दैन।*

गीना : **(हेदविगबाट उत्तर नपाएर केही उँचा स्वरमा)** हेदविग्।

हेदविग : **(आँखावाट हात हटाएर गीनापहि हेर्छे)** के आमा!

गीना : हेदविग छोरी केही ख्याल गर। धेरै पढ़्यौ, अब किताब राख।

हेदविग : आमा, बस अलिकति अझै पढ़न देऊ, अलिकति पढ़छु।

गीना : होइन छोरी होइन, अब किताब उता राख। तिम्रो पिताजीले राम्रो भन्दैन। राति उ आफै पनि पढ़दैनन्।

हेदविग : **(किताब बन्द गरेर)** हो पिताजी पढ्दैनन्, उनलाई पढ्ने शौक पनि छैन।

गीना : **(हातको सिलाउने एक पहि राखेट सानो खातार पेन्सिल** हातमा **लिन्छे)** छोरी, याद छ, आज मखनवालालाई कति पैसा दियो।

हेदविग : एक रूपिया आठ आना।

गीना : हो ठीक हो **(खातामा लेख्छे)** हाय राम, हेरत यो महीना कति मखनलियौ। मासु र पनीरको लागी कति भयो **(खातामा लेख्छे)** औ सब्जी **(जोड्छ)** हाय राम, यसमा पनि यति।

हेदविग : औ बियरको दाम!

गीना : हो हो अनि के! **(खातामा लेख्छे)** अहिले नै यति भयो, तर के गर्नु।

हेदविग : आमा, साँझको लागी तिमीले त्यसै यत्रो बनायौ। हामी दुई त हौ, के जरूरत थियो। पिताजी निमन्त्रणामा गएका छन्।

गीना : हुन्छ, बाँचेको रहन्छ। आज त ग्राहकले पनि सवा पाँच रूपिया दिएर पाए।

हेदविग : आमा सवा पाँच रूपिया?

गीना : हो छोरी, सवा पाँच।

*गीना फेरि आफ्नो सिलाउने उठाँउछे। हेदविग कागज र पेन्सील लिन्छे। देब्रे हातले आँखामा छाया और पारेर चित्र बनाउन थाल्छे।*

हेदविग : आमा अहा, कति राम्रो भयो। पिताजीलाई वर्ल साहबकोमा भोजमा निमन्त्रणामा बोलायो।

गीना : वास्तवमा पिताजीलाई वर्ल साहबले बोलाएको होइन। उसलाई साहबको छोरोले निमन्त्रण दिएको हो **(केही झंझट मानेर)** हामीलाई वर्ल साहबसित के मतलब?

हेदविग : आमा, पिताजी कलि बेला फर्कन्छन? पिताजीले भनेर गएकाछन् मेरो लागी सूरबी महोदयाबाट राम्रा राम्रा चीजहरू ल्याँउछन्।

गीना : हो, किन ल्याउदैन? उसकोमा सब चीज छ, केही कुरोको कमी छैन।

हेदविग : **(चित्र बनाउन कागजमा ढल्केर)** आमा, मलाई अब अलि अलि भोक लाग्न थाल्यो।

*हजलमारको पिता बूढ़ा एकदल कभरामा आँउछन्। बूढ़ोको बगलमा कागजको बण्डल छ अनि कोटको गौजीमा पनि अर्को पाकेट देखिन्दैछ।*

गीना : पिताजी, तपाई यत्रो बेर कहाँ जानुभयो?

एकदल : म दफ्तरमा वसेका बेला बाहिर दरवाजामा कसैले ताला लगाएछ। ग्रावर्सको प्रतीक्षा गर्नुपर्‍यो। फेरि अर्को दखाजाबाट निस्कनु पर्‍यो। उसले···

हेदविग : पिताजी दफ्तरबाट लेख्ने अरू काम पायौ?

एकदल : हेर त छोरी, यी सब हरे, यति काम पाएँ।

गीना : ए, राम्रो भएछ।

हेदविग : तपाईको गोजीमा पनि एउटा पाकेट छ।

एकदल : कहाँ अरे, यो केही पनि होइन, यस्तै हो **(आफ्नो लौरो एउटा कुनामा राख्दै)** गीना, आज मेरो बहुत काम छ। धेरै बेर वस्नुपर्छ **(पछिल्लो भित्तामा वनिएको दरवाजाको एउटा पल्ला ठेल्दै)** ओहो! **(एकछिन दरवाजाबाट हेरेर, दरवाजा सावधानी ले वन्द गर्छन्)** वाह! वाह! सब सुति सके, एकै जगहमा। ओ त्यो त आफैआफ टोकरीमा गए, वाह, वाह!

हेदविग : पिताजी उसलाई टोकरीमा ठण्डा लाग्दैन?

एकदल : के भन्दैछौ! जाड़ो लाग्छ। हेर त उसमा कति पराल भरिएकोछ।

*बूढ़ा देब्रेपहि दरवाजातिर अघि बढ़छून। यहाँ माचिसको डिब्बा छ।*

गीना : उहाँ छ त आलमारीमाथि।

*एकदल आफ्नो कमरामा जान्छन्।*

हेदविग : आमा, एकदमै राम्रो भयो। पिताजीले काम पाए।

गीना : हो राम्रो भयो, उसलेई आफ्नो खर्चको लागी केही पैसा पाँउछ, उसैलाई काम आँउछ।

हेदविग : हो आमा, राम्रो भयो, काममा लागी रहन्छ, नत्र भने बूढ़ी एरिकसनको दुर्गन्ध ठाँउमा वसिरहन्थ्यो।

गीना : हो, तिमीले ठीक भन्दैछौ, राम्रै भयो।

हेदविग : (केही सोचेर) आमा, साहबकोमा अझ भोज सकेको छैन?

गीना : भगवान जानोस् कति ठूलो कुरो हो, अझ पनि चल्दैछ होला।

हेदविग : सुन आमा, पिताजीलेई भोजमा राम्रा राम्रा चीजहरू पाएको हुनुपर्छ। घर फर्कन्दा खुशी हुनुहुन्छ, होइन आमा।

गीना : हो मुन्नी, यदि हाम्रो उताको कमरा किरायमा दिन सके पिताजी खुशी हुने थिए।

हेदविग : हो आमा, कमरा त खालीथै छ।

गीना : मुन्नी, पैसाको अभाव छ अथि यता कमरा त्यसै खाली छ।

हेदविग : आमा, पिताजी फर्के पछि यो कुरा गर्ने केही जरूरत छैन। उ आँउदा खुब सन्तुष्ट र प्रसन्न हुन्छ। कमराको कुरा फेरि पनि गर्न सकिन्छ।

गीना : **(छोरीपट्टि ध्यान दिएर)** कसो छेति, तिम्रो पिताजी साँझमा फर्कन्दा राम्रो कुराहरू मात्रै सुनाउनुपर्छ।

हेदविग : हो आमा, सबैलाई साहै मनपर्छ होइन, सबै खुशी रहन्छन्।

गीना : **(केही सोचेर)** हो छोरी, तैले ठीक भन्दैछस। **(बूढ़ा एकदल फर्कन्छ औ देब्रेपट्टिको दरवाजा खोल्छन्)**

गीना : **(बूढापट्टि घुमेर)** पिताजी भान्साघरबाट केही चाहिन्छ? म ल्याँऊ।

एकदल : म आफै जान्छु, तिमी बस। **(बूढ़ा भान्सा घर जान्छन्)**

गीना : कहीं अँगेटीको आगो त बिगार्दैन **(केही सोचेर)** हेदविग जा, भान्साघरमा हेर, के गर्दैछ।

*बूढा गिलासमा तातो पानी लिएर फर्कन्छ।*

हेदविक : पिताजी, गरम पानी ल्यायौ?

एकदल : हो नानी, गरम पानी हो, चाहिएको थियो। लेख्दैछु नी। मसी सुखा भएछ च्याप च्याप हुँदैछ। दवातमा मैला पसेछ।

गीता : पहिला खानुहोस, खानेकुरो तयार गरी दिएकोछु।

एकदल : तिमीलाई खानुको हतार, मेरो यत्रो काम सक्नुछ, फुरसत कहाँ। मेरो कमरामा कसैलाई आउन नदिनु, मेरो अहिले फुरसत छैन, याद गर्नु **(बूढ़ा आफ्नो कमरामा जान्छन्, गीना र हेदविग आँखा जुझछ)**

गीना : **(स्वर दबाएर)** छेति के विचार छ? चिनले पैसा कहाँ बाट ल्यायो होला?

हेदविग : म बताँऊ, ग्रावर्गले दियो होला।

गीना : ग्रावर्गले दिदैन, उसले यिनको मजदुरी मलाई पठाँउछ।

हेदविग : त्यसो भए कहींवाट उधारो बोतल ल्यायो होला।

गीना : यो गरीबलाई उधारो कसले दिन्छ?

*हजलमार एकदल कमरामा आउँछ, उसले ओभरकोट लगाएकोछ औ टाउकोमा फुस्रो रंगको फेल्ट टोपी छ।*

गीना : हातको सिलाइ एकापट्टि राखेर उभिन्छे। फर्केर आयौ, भोज भयो।

हेदविग : **(खुशीले कुदेर)** आहा! पापा आए।

हजलमार : **(टोपी उतार्दै)** हो, अरू पनि फर्कन लागेका थिए।

हेदविग : पापा, भोज यति छिटो सक्यो?

हजलमार : डिनर पार्टी न हो (**ओभरकोट उतार्न थाल्छ**)

गीना : पर्ख पर्ख, म उतारीदिन्छु।

हेदविग : म पनि मदत गर्छु (**आमा छोरी ओभरकोट उतारन सहायता गार्छन, गीनाले कोट काँटीमा अल्झाँउछ**) पापा, भोजमा धेरै मानिस आएका थिए?

हजलमार : अरे होइन, धेरै कहाँ। हामी बाह्रजना थियौ, चौदह हुनसक्छ।

गीना : खुब बातचीत भयो? सबैसित कुरा भो?

हजलमार : हो, भयो, तर मलाई त ग्रेगर्सले घेरेर राख्यो। उ मसितनै कुरा गरी बस्यो।

गीना : ग्रेगर्स कस्तो लाग्यो? चेहरा अझ पनि त्यस्तै छ?

हजलमार : हो, त्यस्तै छ, चेहरा जस्तो थियो, त्यस्तै छ। पिताजी फर्केको छैन?

हेदविग : आए, त्यहाँ बसेर लेख्दैछन्।

हजलमार : उसले केही भन्यो?

गीना : भनेन, किन केही भयो?

हजलमार : उसले केही पनि भनेन? मेरो विचारमा ग्रावर्गकोमा गयो भनेर सायद कसैले भन्यो। म उसलाई सोधुँ?

गीना : होइन, छोड्दे, के जरूरत छ?

हजलमार : किन, उसले मलाई नआउनु भने?

गीना : उसले सबैलाई मना गरेकोछ, उसलाई नजिस्काऊ।

हेदविग : आमालाई संकेत गर्नकालागी, हो हो।

गीना : (**हेदविगलाई ध्यान नदिइ**) उ यहाँ आएको थियो गरम पानी लिएर गयो।

हजलमार : समझमा आयो तब।

गीना : हो, यही बात हो।

हजलमार : भगवाननै रक्षक हुन। बुढेस्कालमा उसले यो सब सहन परिरहेछ। जसरी भए पनि मन बहलाउन देऊ।

*बूढा फेरि कमरामा फर्केर आँउछन्। उसले लुगा बदली गरेर सुविस्ताको लागी ड्रेसिङ गाउन लगाएकोछ औ पाइपको कश तान्दैछन्*

एकदल : अहा, तिमी फर्क्यौ? मलाई तिम्रो आवाज सुनेको जस्तो लाग्यो।

हजलमार : बस, आँउदैछु।

एकदल : तिमीले मलाई देखेनौ?

हजलमार : देखिन, तर सुनेका थिएँ तपाई उता आउनु भएथ्यो र कैले सोचे

एकसाथनै फर्कौं।

एकदल : तिम्रो शुभ होस्। हजलमार भोजमा को को थिए?

हजलमार : सबै प्रकारका मानिस थिए, फ्लोर, बाल औ कास्पर्शन अनि के नाम हो उसको मलाई याद भएन, उही सबै दरबारी मानिस्।

एकदल : (गर्वले शिर हल्लाएर) केही बुझ्यो गीना! सब दरबारी मानिस आएका थिए।

गीना : हो, त्यहाँ सबै ठूला मानिसहरूमात्र आँउछन्।

हेदविग : पिताजी, उहाँ गाना भएको थियो, कसैले कविता पनि सुनाएको थियो?

हजलमार : होइन छोरी, खल्लो बकवास मात्रै। हो मलाई गाउनु भन्दैथ्यो। उनीहरूको लागी मैले गाउनु के जरूरत थियो?

एकदल : वाह, तिमीलाई के जरूरत थियो?

गीना : अरे, सुनाइदिएको भए के हुन्थ्यो।

हजलमार : वाह, म के जो सुकैको इशारामा नाच्ने गाउने हो? (उत्तेजनाले घुम फिर गर्दै) मबाट यी सब कुरा हुँदैन।

एकदल : होइन होइन, हजलमार यस्ता मानिस होइनन्।

हजलमार : म सोच्न सक्दिन, कि म एकचोटि निमन्त्रणामा यो काम किन गर्न सक्तैनन्। उनीहरू आज यहाँ भोलि वहाँ, सँधै शराब पिउँछन्, निमन्त्रणा खान्छन् अनि जीवन भर यही गर्छन्। जब उनीहरू मौज गर्छन् शानदार निम्तोको सट्टामा आफ्ना साथीहरूको मन किन बहलाँउदैनन्।

गीना : तिमीले उनीहरूको सामने त यी सब कुराहरू भनेनौ?

हजलमार : (गुनगुनाँउदै) हो, तिमीलाई के बताँऊ, कति त उसले सुन्यो, उसको कान त खुल्यो।

एकदल : थाहा छ उनीहरू साधारण मानिस होइनन्, सब दरबारी मानिस हुन्।

हजलमार : होला (लापरवाहीले) 'तोके' को बारेमा केही बात त भयो।

एकदल : के भन्यौ, तोके। थाहा छ तोके अत्यन्तै असल शराब हो।

हजलमार : माने, तोके अत्यन्तै असल शराब हुन सक्छ। तर तपाई जान्नुहुन्छ अंगुरको फसल सँधै एकनासे हुँदैन। हावा पानी राम्रो भए, फसललाई जति घामको खाँचो पर्छ त्यतिनै राम्रो शराब अंगुरको हुन्छ।

गीना : अच्छा, तिमीलाई धेरै थाहा छ।

एकदल : के कुरा गर्‍यौ?

हजलमार : हो उनीहरू बहस गर्न लागे। खैर, उसले पनि कड़ा जवाब पायो। फसलको हालत पनि दरबारी मानिसहरू जस्तो हुन्छ। दुवैको लागी सबै दिन एक समान हुँदैन। कान खोलियो उनको!

गीना : हे भगवान तिमी कस्तो कस्तो कस्तो कुरा गर्छौ।

एकदल : वाह, वाह, नौनी लगाएर चाटयो होला।

हजलमार : मैले ठाड़ै जवाब दिएँ।

एकदल : सुन्दैछौ, बुहारी, ठाड़ो जवाब दिएँ अनि कसलाई, दरबारी मानिसहरूलाई!

गीना : अब म के भनुँ, यस्ता मानिसहरूलाई यसरीनै बोल्नुपर्छ।

हजलमार : हो, तर तिमीले कसैलाई भनिदिनु। यस्ता थोव्रा कुराहरू कमैले गर्छन्। यो त आपस्तको मित्रताको कुरा हो। सबै राम्रो तथा खुश मिजाजका मानिसहरू थिए। हामीले उनीहरूको मन किन दुखाउनु, यस्तो राम्रो हुँदैन।

एकदल : तर तिमीले नराम्रो जवाब दियो।

हेदविग : **(प्यारसित)** हाय, पापा यो सूटमा कति राम्रो देखिन्छ। साँचैनै प्यारो देखिन्दैछ।

हजलमार : किन के राम्रो लाग्दैछ? यो सूट मलाई एकदमै फिट छ, मेरै नापको सिलाए जस्तो। बस् छेउमा केही असजिलो जस्तो छ। हेदविग, अलिक सहायता गर। **(कोट उताछी)** आफ्नै कोट लगाँऊ, गीना, मेरो कोट कहाँ छ?

गीना : अहिले दिन्दैछु **(कोट ल्याएर पतिलाई लगाइदिन्छे)**

हजलमार : यो कोट धेरै सजिलो छ। याद राख्नु, यो सूट भोलिविहान मोल्विकलाई फकाईदिनु।

गीना : **(कोट पटट्याँउदै)** हुन्छ, विहान फकड़िदिन्छु।

हजलमार : **(आङ सीधा गरेर)** आफ्नो कोटमा ज्यादा सुविस्ता हुन्छ। मलाई यस्तै हुन्छ अलिक खकुलो कोट आराम हुन्छ, होइन हेदविग।

हेदविग : हो पापा, यो बेसी राम्रो हुन्छ।

हजलमार : मलाई, नेकटाइ पनि यस्तै खकुलो मनपर्छ, होइन छोरी!

हेदविग : हो पापा, तपाईको लामो घुमेको केश र दाह्रीको साथ यस्तो खकुलो नेकटाई राम्रो देखिन्छ।

हजलमार : **(शिरमा हातले सुम्सुम्याउदै)** मेरो केश घुमेको होइन, लहर जस्तो जरूर भन्न सकिन्छ।

हेदविग : हो पापा, तपाईको केशमा लहरहरू सुन्दर देखिन्छन्।

हजलमार : हो, मेरो केश लहर जस्तै छ।
हेदविग : **(एक छिन पछि उसको कोट तान्दै)** पापा,
हजलमार : हो छोरी, के भन्दैछस्?
हेदविग : हो तपाईलाई थाहा छ।
हजलमार : होइन छोरी, भनन, साँचै मलाई थाहा छैन।
हेदविग : **(रूवाइ को सट्टामा हाँस्दै)** किन दिक लगाएको?
हजलमार : छोरी बताऊ, के कुरा छ?
हेदविग : **(पिताप्रति सस्नेह)** हो, पापा, बहाना बनाँउदैछ। दिनुहोस्, मेरो लागी त्यहाँबाट राम्रा राम्रा चिजहरू ल्याइदिन्छु भन्नु भएको थियो।
हजलमार : उफ्। के भनुँ, मलाई त यादै भएन् विसेर्छु।
हेदविग : हुँदैन, म मान्दिन, तपाई जिस्कनु हुँदैछ, दिनु होस्न, कहाँ लुकाउनु भएकोछ।
हजलमार : साँचो भन्दैछु, छोरी! मलाई यादै भएन। एकछिन पर्ख, एउटा चीज तिमीलाई देखाँऊ। **(उठेर सूटको गोजी छाम्छन्)**
हेदविग : **(प्रसन्नताले यता उता कुद्छे)** आमा, आमा, हेरत।
गीना : दिदैछ छ त। तिमी त एकोहोरो लाग्छौ।
हजलमार : **(कोटको गोजीबाट एउटा कागज निकाल्दै)** हेर, छोरी यो के हो।
हेदविग : यो त कागज हो।
हजलमार : होइन, यहाँ हेर, के लेखेको छ "मेनु" छोरी थसलाई मेनु भनिन्छ। भोजमा जति चीजहरू दिएको थियो, त्यसको नामहरू छ यसमा। यो भोजको पदार्थहरूको सूची हो।
हेदविग : बस, यही ल्याएँ।
हजलमार : हो छोरी, साँचो भन्दैछु। मलाई थाहा भएन तर मेनुमा जो लेखिएको थियो, त्यो एकदमै बढ़िया थियो। तिमी टेबलमा बस, तिमीलाई सबै चीजको स्वाद बताँउदै जान्छु। श्यावाश, बड़ी प्यारी छोरी छे।
हेदविग : **(आँसु पिएर)** रहन दिनुहोस! **(मेजमा बस्छे तर मेनु पढ़दिन)** गीना उसलाई सम्झाउने संकेत गर्छे। हजलमार गीनाको संकेत हेर्छन्।
हजलमार : **(बरपर हिड़दै)** मेरो दिमागले काम गरेको छैन। कसैले परिवारकोलागीके के गर्छ, के के सोच्छ, कति याद गर्नु। कसैले सानो कुरो भुल्छ, घरका मानिसहरू मुख फर्काउछन्। कसो गरौ, सबै सहनु पर्छ। मानिसको दिमाग पत्थर हुन्छ। **(अँगेठी पट्टि गएर पिताको नजिक उभिन्छ)** पिताजी, साँझमा तपाईले उता हेर्नु भयो?

एकदल : हो किन होइन, हेरेको थिएँ, उ झोलोंगो पस्यो।

हजलमार : के झोलोंगो पसी? तब सम्झ उसलाई अब अभ्यास भयो।

एकदल : हो हो, मैले तिमीलाई भनेकै हुँ,उसलाई अभ्यास भइहाल्छ, तर त्यहाँ ठीक गर्नुछ।

हजलमार : अरू केही बदली गर्नु, ठीक गर्नुछ।

एकदल : हो, यो बहुत जरूरी छ। धेरै ध्यानसित गर्नुमर्छ।

हजलमार : हो हो, किन हुँदैन, जस्तो भन्नुहुन्छ भइ हाल्छ। यहाँ सोफामा बसेर भन्नुहोस् के गर्नु छ।

एकदल : हुन्छ बताँउछु, म अलिक कंकट सफा गँरू। कंकट रोकिन्दै छ। अलिक अड्किन्दैछ **(आफ्नो कमरामा जान्छ)**

गीना : **(पतिलाई हेरेर मुस्काराँउछे)** कंकट सफा गर्न गएकोछ!

हजलमार : गर्नु देऊ गीना, जे इच्छा हुन्छ। बुढ़ापामा के हालत भयो। यिनले केही त गर्नै पर्छ। खैर, जो भन्छ गरेरनै छोड़छ।

गीना : भोलि तिमीलाई समय कहाँ हुन्छ?

हेदविग : **(आमालाइ टोक्दै)** आमा भोलि समय किन पाँउदैन?

गीना : बिर्सी हाल्यौ। तस्वीरहरूमा ब्रश लाउनुपर्छ। ग्राहक दुइ तीन पटक आइसके।

हजलमार : हे भगवान, त्यही फोटोहरू। खैर त्यसमा समय लाग्दैन। कुनै नयाँ अर्डर छ?

गीना : कहाँ, जो भाग्यमा छ। बस दुइ ग्राहक आँउछन् जसले हिज तिमीसित समय मिलाएर गएकोछ।

हजलमार : बस, ती दुइ! अब अरू के हुन्छ। कसैले जतननै नगेर…

गीना : तिमी भन, म के गरूँ। जति सकिन्छ पत्रहरूमा विज्ञापन दिएकै छु।

हजलमार : हो, तिमी त गर्छौ, त्यसको परिणाम पनि हेर्दैछुं। मेरो विचारमा कमरामा बस्ने किरायदार पनि आए को छैन।

गीना : अहिलेसम्म त छैन।

हजलमार : तिमी के आशा गर्छौ। यदि कसैले परवाह नगरे, कुनै जतन नगरे, गीना तिमीले हिम्मत गर्नुपर्छ।

हेदविग : **(पितापट्टि अघि सरेर)** पिताजी, बाँसुरी बजाउनुहुन्छ, ल्याइदिऊँ।

हजलमार : होइन, दिल बहलावको लागी मेरो फूर्सद छैन। **(कमरामा घुम्दै)** मेहनत, मेहनत, मेरो भाग्यमा खाली मेहनत लेखिएकोछ। भोलिदेखि हेर, देखाँउछु, मेहनत कसरी गरिन्छ। जबसम्म शरीरमा दम छ, पछि हट्दिन।

गीना : के भन्दैछौ, तिमीले त मेरो कुराको उल्टा अर्थलगायौ।

हेदविग : पापा, बियर पिउनु हुन्छ, बोतल ल्याँऊ।

हजलमार : होइन, मलाई केही चाहिन्दैन **(सहसा पाइला रोकिन्छ)** बियर के भन्यौ तिमीले?

हेदविग : **(उत्सुकतासित)** हो, पापा, एकदम ठण्डा बियर छ।

हजलमार : अच्छा छोरी, तिमी भन्छौ भने पिउँछु। एक बोतल लिएर आऊ।

गीना : स्यावास हेदविग, जा ले! फेरि आरामसित बस्छु। **(हेदविग भान्सा घरतिर दौड़न्छे। अँगेटीको सामने हजलमारले उसलाई रोक्छ् छोरीको अनुहार राम्ररी हेरेर उसलाई आफ्ना पट्टि तान्छ)**

हजलमार : मेरो प्यारो छोरी!

हेदविग : **(उसको आँखा उल्लासले भिजेको हुन्छ)** मेरो पापा राम्रो छ।

हजलमार : होइन छोरी, म राम्रो छुइन। म त्यो धनीको भोजमा मजा गर्न लागें, सबै कुरो पेटमा हाल्न लागें, अरूको मलाई यादनै आएन।

गीना : **(मेजको साथमै भएको चौकीमा बस्छे)**—यो के उटपटाङ् बोल्दैछौ?

हजलमार : म ठीक भन्दैछु। जे होस्, ती कुराहरू बिर्स। मेरो लागी तिमीनै सबकुछ हौ।

हेदविग : **(हात पिताको गलामा राखेर)** हाय पापा, म त पापालाईनै माया गर्छु।

हजलमार : हुन सक्छ मलाई केही थाहानै हुँदैन। तिमीलाई थाहा छ मेरो दिमाग कति चिन्तामा डुबेको हुन्छ। उफ्। **(आँखा पुस्छ)** यस समय बियरको जरूरत छैन। अच्छा छोरी, बाँसुरी, ल्याऊ। **(हेदविगले पुस्तकको आल्मारीबाट बाँसुरी ल्याएर पिताजीलाई दिन्छे)** श्याबास् छोरी यो ठीक भयो। तिमी दुइ र यो मेरो बाँसुरी, अरू केही चाहिन्दैन। **(हेदविग आमाको छेउमा बस्छे। हजलमार कमरामा ओहोर दोहोर गर्छ तर फेरि आफैलाई वशमा ल्याएर बाँसुरीमा मधुरो एक गाउँले नाचको धुन बजाँउछ। बाँसुरीको धुन धीमा हुन्छ तर अत्यन्त भावपूर्ण। एक छिन बजाएर बाँसुरी मुखबाट हटाँउछ अनि देब्रे हाथ गीनापट्टि लगेर बोल्छ)** केही परवाह छैन। हामी गरीब छौ, दुःखले जीवन निर्वाह गर्छौ तर यो हाम्रो घर हो। समयबार भन्छु दुनियाँमा आफ्नो घरभन्दा ठूलो केही छैन। **(हजलमार फेरि बाँसुरी बजाउन लाग्छ। केही क्षण पछि दरवाजामा खटखट आवाज सुनिन्छ)**

गीना : **(चौकीबाट उठेर)** सुन, दरवाजामा कोही आएकोछ।

हजलमार : **(बाँसुरी एक पट्टि राखेर)** हो, कोही छ।

*गीना उठेर दरवाजा खोल्छे।*

ग्रेगर्स वर्ल : (**दरवाजाको बाहिरबाट बोल्छ**) क्षमा गर्नुहोस्।

गीना : (**आश्चर्यले पछि हट्दै**) ओह।

ग्रेगर्स : (**दरवाजाको बाहिरबाट**) मिस्टर एकदल फोटोग्राफर के यहीं बस्नुहुन्छ?

गीना : हो, यहीं बस्नु हुन्छ।

हजलमार : (**दरवाजापट्टि अघि बढ्देर**) ग्रेगर्स, अरे तिमी, आऊ भित्र आऊ।

ग्रेगर्स : (**कमरामा आएर**) मैले तिमीलाई आँउछु भनेको थिएँ तिमीसित कुरा गर्न चाहन्छु।

हजलमार : तर आज नै। के अतिथिहरूलाई छोड़ेर आयौ?

ग्रेगर्स : अतिथिमात्रै होइन, घर पनि छोड़ेर आएँ (**गीनापट्टि फर्केर**) नमस्ते, तपाई श्रीमती एकदल हुनुहुन्छ होइन। तपाईले मलाई चिन्नुहुन्छ भन्ने मलाई त आशा थिएन।

गीना : ज्यू चिने। मि. वर्ल, तपाईलाई चिन्न केही अप्ठ्यारो पर्छ?

ग्रेगर्स : हो, कठिन त नहुनु पर्ने। मेरो अनुहार आमाको अनुहारसित धेरै मिल्छ। उसलाई त तपाई राम्ररी चिन्नु हुन्छ।

हजलमार : (**आश्चर्य मानेर**) ग्रेगर्स के भन्यौ, घर छोड़ेर आयौ?

ग्रेगर्स : हो, मैले होटलमा कमरा लिएकोछु।

हजलमार : किन यसो गऱ्यौ। अच्छा, आएपछि ओभरकोट र टोपी त उतार र आरामसित बस।

ग्रेगर्स : धन्यवाद।

*ग्रेगर्सले ओभरकोट उतार्छ। उसले भोजको समय लगाएको राम्रो सूट खोलेर खरानी रंगको साधारण सूट लगाएकोछ।*

हजलमार : सोफामा बस आरामसित, शिष्टाचारको जरूरत छैन।

*ग्रेगर्स सोफामा बस्छ, हजलमार उसको छेउको टेबलसित राखेको चौकीमा बस्छ।*

ग्रेगर्स : (**कमरामा चौरतिर नजर घुमाएर**) तिम्रो घर यही हो। आफ्नो काम पनि यहीं गर्छौ।

हजलमार : यो त स्टुडियो हो, सामान देख्दैछौ।

गीना : घरमा सबै भन्दा ठूलो कमरा यही छ, यसैले प्रायः यहाँ बस्छौ।

हजलमार : अघि हाम्रोमा यो भन्दा ठूलो घर थियो तर यहाँ सुबिस्ता छ। हेर· त यहाँ कति जगह छ।

गीना : बाटोको उत्तापट्टि पनि एक कमरा छ। त्यसलाई भाड़ामा दिन सक्छौं।

ग्रेगर्स : **(हजलमारपट्टि हेरेर)** के यो कमरा भाड़ामा छ अहिले?

हजलमार : छैन, अहिले खाली छ। राम्रो किरायदार सजिलोसित पाँउदैन, कोशिस गर्नुपर्छ। **(हैदविगलाई सम्बोधन गदेर)** बियर छ? **(हेदविग छ भन्दै भान्सा घरतिर जान्छे)**

ग्रेगर्स : यो छोरी हो?

हजलमार : हो, यसको नाम हेदविग हो।

ग्रेगर्स : एउटै नानी?

हजलमार : हो, बस यही छ। हाम्रो लागी सबकुछ यही हो। हाम्रो आशा **(स्वर दबाएर)** औ यसैको हामीलाई ठूलो चिन्ता छ।

ग्रेगर्स : किन, के कुरा छ?

हजलमार : डाक्टरले भन्दैछ, उ अन्धा हुन सक्छ, बाँच्न सक्दैन।

ग्रेगर्स : उसको दृष्टिनै हराँउछ?

हजलमार : अहिले त मामुली तकलीफ। केही दिन त उसको नजर रहन्छ तर डाक्टरले भने अनुसार केही बर्षपछि बाँच्न सक्दैन, केही उपाय छैन।

ग्रेगर्स : ओ हो, यो त विकट दुर्भाग्य हुन्छ। आखिर कारण के बताँउछ?

हजलमार : **(गहिरो सास फेरेर)** खानदानी असर हो, अरू के हुनसक्छ।

ग्रेगर्स : खानदानी?

गीना : यसको बजुको दृष्टि पनि खराब थियो।

हजलमार : हो, पिताजी भन्थे, मलाई त आमाको केही याद छैन।

ग्रेगर्स : खुबै प्यारो नानी छ। यही आशंकाले विचरी दुःखी रहन्छे।

हजलमार : होइन, यस्तो त। तिमी आफै सम्झ हामी यस्तो कुरा उसलाई कसरी भन्न सक्छौं। मन बलियो बनाउन कठिन छ। अहिले उसलाई केही थाहा छैन। विचरी सिधा र हँसिलो हुन्छे। दिनभरी चंचल रहन्छे। उसको भाग्यमा कस्तो अन्धकार आउनेवाला छ। यस आशंकाले मेरो मन छिया छिया हुन्छ।

*हेदविग ट्रेमा बियरको बोतल औ ग्लास लिए आउँछे र टेबलमा राखिदिन्छे।*

हजलमार : **(छोरीको शिरमा हात राखेर)** स्यावास, धन्यवाद छोरी। **(हेदविग पिताको गलामा हात राखेर उसको कानमा कुरा गर्छे)** होइन, टोस्ट मखन केही चाहिन्दैन, धन्यवाद, हँ ग्रेगर्स, तिमी टोस्ट मखन खान्छौ, मगाऊँ।

ग्रेगर्स : **(अस्वीकारले शिर हल्लाँउदै)** धन्यवाद, मलाई चाहिन्दैन।

हजलमार : **(उदास स्वरले)**—अच्छा, नानी, तिमी भन्दैछौ भने लिएर आऊ।

टोस्ट अलिक ताजा होस् मलाई त्यस्तै मन पर्छ। मखन राम्ररी लाउनु। हेदविग खुशीले मुन्टो हल्लाँउदै फेरि भान्सा घर तर्फ दौड़न्छे।'

ग्रेगर्स : **(भित्र जान लागेकी केटीलाई ध्यानपूर्वक हेरेर)** त्यसै त केटीको राम्रो स्वास्थ्य छ।

गीना : हो, भगवानको कृपाले अरू सब कुरो ठीक छ।

ग्रेगर्स : चेहरा मोहड़ा सबै तपाईसित मिल्छ। ठूलो भएर तपाईजस्तै हुन्छे। उसको उमेर कति भो।

गीना : बस, चौध वर्ष पुगी, पर्सी यसको जन्मदिन छ।

ग्रेगर्स : तर यसको शरीर राम्रो छ।

गीना : गए साल यो निकै बढ़ी।

ग्रेगर्स : नानीहरू छिटो छिटो बढ़ेको देखेर मेरो उमेरको याद आउँछ। तपाईहरूको विहे भएको कति वर्ष भयो।

गीना : विहे भएको। पुरा पन्द्रह वर्ष भयो।

ग्रेगर्स : के पन्द्रह वर्ष।

गीना : **(ग्रेगर्सपट्टि शंकाको दृष्टिले हेर्दै)** हो पन्द्रह वर्ष पुग्यो।

हजलमार : हो हो पन्द्रह वर्ष पुग्यो, केही महीना बेसी पनि भो। **(बात बदली गर्दै)** ग्रेगर्स, कारखानामा त तिम्रो लागी पन्द्रह वर्ष त युग बिते जस्तो लाग्यो होइन?

ग्रेगर्स : हो, बितेको समय भारी लाग्छ तर बितेर गयो। याद गर्दा थाहा लाग्छ केही भएन जस्तो, केही पत्तानै हुँदैन।

*बूढो एकदाल स्टुडियोमा आउँछ, मुखमा कंकट छैन, शिरमा फौजी उर्दीको पुरानो टोपी छ, कदम लरवरिन्दैछ।*

एकदल : हजलमार, आऊ बस, कुरा गरौ, के भन्दै थियौ?

हजलमार : **(पितापट्टि अघि वढ़ेर)** पिताजी, हेर्नुहोस् को आएकोछ। मि॰ गेगर्स वर्ल आएकोछ। तपाईलाई चिनको याद छ?

*ग्रेगर्स बूढ़ोको सम्मानमा उभिन्छ।*

एकदल : **(ग्रेगर्स पट्टि ध्यानपूर्वक हेर्दै)** वर्ल! तिम्रो भनाइको मतलब उसको छोरो। किन मसित के काम छ?

हजलमार : तपाईसित केही काम छैन। चिनी मलाई भेटन आएका हुन्।

एकदल : तब मसित के मतलब छ?

हजलमार : छैन, केही पनि छैन।

एकदल : **(आफ्नो हात झुण्डयाँउदै)** मलाई केही परवाहा छैन। तिमीलाई थाहा छ मलाई कसैसित डर छैन। तर···

ग्रेगर्स : **(बूढ़ो पट्टि अघि सरेर)**–लेफ्टीनेन्ट एकदल साहब, मैले तपाईलाई होयदलबाट सलाम लिएर आएको छु। धेरै दिन बस्नु भयो, तपाईलाई याद छ, शिकार खुब खेल्नु हुन्थ्यो।

एकदल : म शिकार खेल्थें?

ग्रेगर्स : हो, म होयदलको कारखानाबाट आउँदैछु।

एकदल : हो! होयदलबाट! एक समय त्यहाँ मेरो खुब चिनापर्ची थियो।

ग्रेगर्स : हो, त्यस समय, त्यहाँ तपाईको शिकारको खुब चर्चा हुन्थ्यो।

एकदल : हो, ठीक हो, मेरो शिकारको काफी चर्चा हुन्थ्यो। तिमी मेरो टोपी देख्दैछौ? म आफ्नो घरमा छु। यहाँ आफ्नो टोपी लगाउनु मलाई कसले रोक्नुसक्छ? टोपी लाएर म शहर बजार सड़कतिर जादिन।

*हेदविग ट्रेमा टोस्ट मखन ल्याएर टेबलमा राख्छे।*

हजलमार : पिताजी बस्नुहोस्, बियर लिनुहुन्छ? ग्रेगर्स, तिमी लेऊ न।

*बूढ़ो मनमनै गुनगुनाँउदै, लरखरिन्दै सोफापहि आँउछन्। ग्रेगर्स हजलमारको नजिक चौकीमा बस्छ। गीना टेबलको केही पर बस्छे र सिलाउन लाग्छे। हेदविग पिताको नजिक उभिन्छे।*

ग्रेगर्स : तपाईलाई याद छ हजलमार र म कहिले गर्मीको छुट्टीमा, कहिले क्रिसमसको छुट्टीमा होयदलमा तखाईकहाँ आउने गर्थ्यौं।

एकदल : तिमी आउँथ्यौ? होइन मलाई केही याद छैन। तर त्यससमय म शिकार खुब खेल्थे। भालुको शिकार गर्थे। नौवटा भालु मारें।

ग्रेगर्स : **(बूढ़ालाई सहानुभूतिसित हेर्दै)** आजकल त तपाई शिकार खेल्ने अवसरनै पाउनु हुन्न।

एकदल : ओ हो, तिमीलाई के बताऊँ। शिकार त आजकल पनि कहिले काहीं खेलिन्छ। हो त्यस्तो शिकार त हुनसक्दैन, यसमा केही सन्देह छैन। जंगलमा, जान्दछौ, जान्दछौ, **(बियरको एक घुटको पिउँछ)** जंगलतिर त आजकल खुब रौनक होला?

ग्रेगर्स : तपाईको समयको जस्तो रौनक छैन। जंगल धेरै मासिएकोछ।

एकदल : **(स्वर दबाएर मानौ आशंका अनुभव गरिरहोकेछ)** यस्तो गर्नु भूल हो। त्यसमा डर हुन्छ। त्यसको परिणाम राम्रो हुँदैन। जंगलले बदला नलिइ बस्दैन।

हजलमार : **(पिताको ग्लास फेरि भरिदिन्छ)**–लिनुहोस् पिताजी, अझ अलिक लिनुहोस्।

ग्रेगर्स : तपाईलाई त सँधै खुला हावामा बस्ने बानी भइसकेकोछ। चारैपहि

घेरा लगाएको सन्दूक जस्तो शहरको घरमा बन्द रहनु तपाईलाई सहन हुन्छ।

एकदल : **(पुत्रपट्टि हेर्दै मुस्कुराउँदै)** अरे यो जगह त नराम्रो छैन, छ र?

ग्रेगर्स : तर तपाईलाई याद छ। तपाईलाई अर्के वातावरण, शीतल, ताजा हावा अनि जंगल र मैदानको बिच स्वतन्त्र पशु पक्षिहरूको साथ बस्ने अभ्यास भइसकेकोछ।

एकदल : **(मुस्कुराँउदै)** हजलमार, यसलाई देखाइ देऊ।

हजलमार : **(केही उत्तेजित र दुःखसित)** होइन, होइन, पिताजी, अरू कुनै दिन।

ग्रेगर्स : मलाई के देखाउन चहान्छौ?

हजलमार : अरे भाइ, केही पनि होइन, त्यसै, फेरि कुनै दिन हेर्नु।

ग्रेगर्स : **(बूढालाई सम्बोधन गर्दै)** लेफ्टीनेन्ट साहब म छिटै कारखानामा फर्कन्छु। तपाई पनि मसित जानु भए राम्रो हुन्यो। दस्तावेजहरू नकल गर्ने काम प्रशस्तै र सुविधासित पाउनु हुन्छ। यहाँ तपाईको दिल बहलाउ र शौकको के अवसर छ र!

एकदल : **(विस्मयसित घुम्दै)** दिल बहलाऊ र शौकको के अवसर छ?

ग्रेगर्स : यो ठीक हो कि तपाईकी छोरी छ, बाल-बच्चा पनि छ तर यिनीहरूको आफ्नै धन्धा छ। तपाई जस्तो मानिस जसलाई सँधै स्वतन्त्र र उन्मुक्त जीवन अधिक मनपर्छ, वातावरण को प्रबल आकर्षण रहेको छ।

एकदल : **(टेबलमा हात राखेर)** हजलमार, यसलाई देखाइ देऊ।

हजलमार : ज्यू पिताजी, तर यति बेला। हेर्नु सक्छ? अँध्यारो भर सक्यो होइन?

एकदल : पग्ला भइस, जुनेली रात छ **(उठेर खड़ा हुन्छ)** म भन्दैछु, यसलाई देखाइ देऊ। हजलमार म जान्छु, तिमी पनि आएर सहायता गर।

हेदविग : पापा, जानुहोस्न।

हजलमार : **(उभिन्छ)**, अच्छा।

ग्रेगर्स : **(गीनालाई सम्बोधन गर्दै)** मलाई के देखाउन चाहनु हुन्छ?

गीना : ज्यू, केही पनि होइन, तपाई के आशा गर्न सक्नुहुन्छ? एकदल र हजलमार पछिल्लो भित्ताको दरवाजा पट्टि जान्छन्। अनि भित्रपट्टि जाने दरवाजाको पल्ला ठेल्छन्। हेदविग एकदलको सहायता गर्छे। ग्रेगर्स सोफाको छेउमा उभिन्छ। गीना लुगा सिलाउन लाग्छे। खुल्ला दरवाजाबाट बांगो टेड़ो बुँइगल देखिन्छ। बुँइगल ठाउँ ठाउँमा प्वाल देखिन्छ। घरको तल्लो भागबाट अँगेटीको चिम्नीहरू

त्यसैबाट निस्केकोछ। छानाबाट जुनको उज्यालो आएकोले बुँइगल मा धब्बा देखिन्छ। बुँइगल को शेष भागमा अन्धकारको छाया परेको छ।

एकदल : (ग्रेगर्स पट्टि हेर्दै) आऊ, यहाँ आएर हेर।

ग्रेगर्स : (बूढ़ोको छेउमा गएर) हजुर, यहाँ के छ, के हेरूँ?

एकदल : यहाँ आऊ अनि ध्यानसित हेर।

हजलमार : (दिक्क मानेर)—यो जम्मै पिताजीको शौक हो।

ग्रेगर्स : (दरवाजामा आएर बुँइगलतिर हेर्दै) लेफ्टीनेन्ट साहब, यहाँ कुखुरा पाल्नु भएको छ? अहिले विश्राममा छ, कुनै दिन दिउँसो आएर हेर्नु।

हेदविग : हाम्रो यहाँ···।

एकदल : उसस···। अहिले चुप लाग।

ग्रेगर्स : हो, मलाई थाहा भयो, तपाईको यहाँ परेवा पनि छ।

एकदल : वाह, परेवा हुन के अचम्भको कुरो हो? त्यहाँ हेर, गुँढ लगाएर बसेकोछ। जान्दछौ, परेवाले धरतीमा गुँढ लाउँदैन।

ग्रेगर्स : तपाईको यहाँ साधारण परेवा के हुन्छ?

एकदल : साधारण परेवा, अरे! हाम्रो यहाँ लोटन परेवा पनि छ, एक जोड़ा बच्चा पनि छ। तिमी यहाँ आएर हेर, त्यहाँ भित्तामा पेटी देखिन्दैछ।

ग्रेगर्स : ज्यू, त्यहाँ के छ?

एकदल : खरायो, त्यही सुत्छ।

ग्रेगर्स : वाह, तपाईकोमा खरायो पनि छ?

एकदल : किन केही शर्त राख्छौ! सुन्दैछौ हजलमार, हाम्रोमा खरायो पनि छ सोध्दैछ। तिमी यता हेर, तिमीलाई देखाउँछु। तिमी के भन्छौ, छोरो, सामुन्नेबाट अलिक हट्। तिमी यहाँ आऊ, यहाँ। यहाँबाट हेर, अब हेर। त्यहाँ सामने टोकरी छ अनि त्यसमा घाँस छ।

ग्रेगर्स : ज्यू, देख्दैछु। टोकरीमा चरा पनि छ।

एकदल : हो, चरा!

ग्रेगर्स : हो, चरै त हो।

हजलमार : चरा त हो तर कुन चरा, बताऊ।

हेदविग : साधारण चरा होइन!

एकदल : उसस···।

ग्रेगर्स : कोही बेलायती चरा हो!

एकदल : होइन बेलायती चरा होइन, साहब, जंगली हाँस हो।

ग्रेगर्स : ओ हो, साँच्चैनै जंगली हाँस हो?

एकदल : ज्यू, तपाई भन्दै हुनुहुन्छ, चरा। यो जंगली हाँस हो, असल जंगली हाँस।

हेदविग : यो जंगली हाँस मेरो हो।

ग्रेगर्स : जंगली हाँस हो तर यस्तो ठाउँमा बस्न सक्छ? यसलाई यहाँ कष्ट हुन्छ।

एकदल : होइन, यसको लागी पानीको कुवा छ। जब इच्छा हुन्छ कुवाको पानीमा छपछप खेल्छ।

हजलमार : प्रत्येक दुइ दिनमा कुवामा ताजा पानी हालिन्छ।

गीना : (**हजलमारलाई हेर्दै**) हेर, दरवाजावाट हिउँ जस्तो हावा आउँदैछ। यहाँ बस्न सकिन्दैन।

एकदल : हो! हो! अहिलेनै दरवाजा बन्द गर्दैछु। रात परेपछि जानवरहरूको नीद विगार्न हुँदैन। आऊ, हेदविग धक्का देऊ।(**हजलमार र हेदविग धैलोका पल्लाहरू धकेल्छन्**) तिमीलाई फेरि कुनै दिन राम्ररी देखाउँछु। (**वूढ़ा अंगेटीको नजिक हात भएको कुर्सीमा वस्छन्**) साँचैनै, जंगली हाँस बहुत अचंभ र गरीब चरा हुन्छ।

ग्रेगर्स : तर तपाईले यसलाई कसरी पक्रनु भो?

एकदल : मैले समातिन। यो त शहरको एक सज्जनका दयाले यहाँ आइपुगेको हो।

ग्रेगर्स : (**संकोचसित**) मेरो पिताजीको दयाले त यहाँ ल्याएको होइन।

एकदल : हो हो, तिमीले ठीक भन्यौ, उसैले, तिम्रै पिताजीले, हो।

हजलमार : राम्रो भयो, ग्रेगर्स, तिमीले कसरी यस्तो अनुमान लगायौ।

ग्रेगर्स : तिमीले भनेको थियौ होइन तिम्रो पिताजीसित ठूलो गुण लागेकोछ। मलाई याद भयो, सायद यो पनि उसैका…

गीना : तर यो जंगली हाँस मि॰ वर्लबाट पाएको होइन।

एकदल : गीना, यो जंगली हाँस हाकनवर्लको दयाले हामीले पाएको हो। (**ग्रेगर्सपट्टि हेरेर**) तिम्रो पिता नावमा थियो। उसले यसमाथि निशाना लगायो। जान्दछौ तिम्रो पिताको नजर राम्रो थिएन। चरालाई चोट लाग्यो तर मरेन।

ग्रेगर्स : ओहो, सायद मामुली चोट लाग्यो होला।

हजलमार : हो, दुइ तीन छराले लाग्यो होला।

हेदविग : पखेटामा लागेकोले यो उड़न सक्दैन।

ग्रेगर्स : चोट लागेर उड़ेर गएको होला, तल ठोक्किन पुग्यो।

एकदल : (**लरखरिएको मोटो आवाजमा**) हो हो, के जंगली हाँसले यस्तै त

गर्छ। जति गहिरो जान सक्छ जान्छ र तल फेदमा जे जे चीजहरू पाउँछ चुच्चोमा राखेर बस्छ, माथि आउँदै आउँदैन।

ग्रेगर्स : तर लेफ्टीनेन्ट साहब, तपाईंको जंगली हाँस त माथि पौरेर आयो।

एकदल : यस्तो कुरा होइन, तिम्रो पिताजीको कुकुर अचम्भै चनाखो छ। कुकुर जंगली हाँसको पछि पौरेर गयो र जंगली हाँसलाई पक्रेर ल्यायो।

ग्रेगर्स : **(हजलमार पट्टि फर्केर)** त्यस पछि जंगली हाँस तिमीले पायौ।

हजलमार : होइन त्यस्तो होइन। तिम्रो पिताजीले पहिले आफ्नोमा राखेको थियो। यसको अवस्था बिग्रन्दै गयो। पेटर्सन साहेबले भन्यो–यो बाँच्दैन, हुकुम भए मारी दिऊँ।

एकदल : **(लरखरिएको आवाजमा)** हो पेटर्सन, अरे त्यो त बूढो गधा हो।

हजलमार : **(स्वर दबाएर)** सम्झयौ, यसरी जंगली हाँस हाम्रोमा आयो। पिताजी पेटर्सनलाई चिन्नुहुन्छ। यिनैले जंगली हाँसको कुरा गरेर यहाँ ल्याएक्रो हो।

ग्रेगर्स : यो अल्गो ठाउँमा यो राम्ररी बसेकोछ।

हजलमार : अब एकदम ठीक छ, मोटो पनि भएकोछ। यत्रो दिन बसेकोले यो सबैसित मिल्न थालेकोछ। उसले आफ्नो पुरानो तरीका भुल्यो, यसैले बाँचेको पनि छ।

ग्रेगर्स : तिमी ठीक भन्दैछौ। तर यसलाई पानी र खुला आकाश नदेखाउनु। अच्छा, अब म जान्छु, निकै अबेर भयो। तिम्रो पिताजी सुती सक्यो।

हजलमार : अरे–तिमी उसको चिन्ता नगर।

ग्रेगर्स : हो, एउटा कुरा सुन, तिमीले भन्दैथ्यो तिम्रोमा किरायको कमरा छ। तिमीलाई त्यसको जरूरत छैन?

हजलमार : किन सोच्दैछस्, कसैलाई खाँचो छ।

ग्रेगर्स : जगह त मलाई पनि चाहिन्छ।

हजलमार : तिमीलाई?

गीना : के भाइ साहब, तपाईंलाई आफ्नै लागी कमरा चाहियो?

ग्रेगर्स : म कमरा पाउन सक्छु? पाए, भोलि बिहानै यहाँ आउने थिएँ।

हजलमार : किन हुँदैन, खुशीसित।

गीना : होइन, कमरा अलिक सानो पनि छ, उज्यालो पनि छैन अनि···

ग्रेगर्स : तपाई त्यसको परवाह नगर्नुहोस्।

हजलमार : मेरो विचारमा कमसग त एकदमै राम्रो छ, सबै सुविधा भएको।

गीना : तर त्यसको तल्लो कमराको तल्लो तलामा जो विचित्र वस्तु वस्छ''' ।

ग्रेगर्स : को हो तिनीहरू।

गीना : एक त यता उता ट्युसन पढ़ाएर गुजारा गर्छ।

हजलमार : मिस्टर मौलविक, उसले त अब डिग्री प्राप्त गरिसक्यो।

गीना : अर्काको नाम हो रेलिङ, उ डाक्टर हो।

ग्रेगर्स : रेलिङ उसलाई त सायद म चिन्छु। मेरो विचारमा उसले होयदालमानै प्रेक्टीस गर्छ, होइन।

गीना : दुवै केही कामको छैन। साँझ परेपछि कहाँ जान्छन्, कहिले फर्किन्छ कहिले त्यस्तै हालतमा'''

ग्रेगर्स : केही छैन, गुजारा भइहाल्छ। मेरो विचारमा म पनि जंगली हाँस जस्तै नयाँ जगहमा रमाउन लागौं।

गीना : हतार के छ भोलि कुरा गरौं।

ग्रेगर्स : **(गीनालाई सम्वोधन गर्दै)** यस्तो लाग्छ तपाई आफ्नो घरमा मलाई कमरा दिन चाहनुहुन्न।

गीना : हे राम, कसरी यस्तो कुरा विचार्नु भयो।

हजलमार : साँच्चैनै, गीना तिमी कस्तो कुरा गर्दैछौ **(ग्रेगर्स पट्टि फर्केर)** तिमी भन, अहिले केही दिन शहरमै बस्न चाहन्छौ?

ग्रेगर्स : **(ओभरकोट लाउँदै)** हो, शहरमै बस्ने विचार छ।

हजलमार : आफ्नो घरमा पिताजीको साथ बस्दैनौ? किन, के गर्ने विचार छ।

ग्रेगर्स : यहीनै निश्चय गरेको भए फेरि कठिन किन्न, तर आफ्नो दुर्भाग्यलाई के भनुँ। मेरो जन्म त्यो परिवारमा भयो। त्यो सम्बन्ध भन्दा दुर्भाग्य अरू के हुनसक्छ?

हजलमार : मेरो नजरमा त यस्तो केही लाग्दैन।

ग्रेगर्स : **(थरथराउँदै)**—यदि यस परिवारसित सम्बन्धित मेरो स्थानमा अरू कोही भए, म कहिले पनि उसको अनुहार हेर्ने थिइन। दुर्भाग्यले यस परिवारमा जन्म लिएर, यस परिवारको नाम पाएर''' ।

हजलमार : **(हाँसेर)**—तिमी ग्रेगर्स वर्ल बन्न चाहँदैनौ भने, के बन्न चाहन्छौ?

ग्रेगर्स : मेरो बशमा भए, आफै बदली गर्नु सक्ने भए म शिकारी कुकुर भएर बस्नु सन्तुष्ट मान्ने थिएँ।

गीना : कुकुर!

हेदविग : **(झिझट मान्दै)** हाय, होइन!

ग्रेगर्स : हो, खुब तेज शिकारी कुकुर बनेर औ डुबुल्की मारेर पानीको तहबाट जंगली हाँस समातेर ल्याउथें। जगंली हाँस तहको मैला

कुचैला तथा लेऊमा चुच्चो दबाएर डुबुल्की मार्छ। म शिकारी कुकुर भएर त्यसलाई समातेर ल्याउँथे।

हजलमार : ग्रेगर्स, तिमी के भन्दैछौ, तिम्रो कुराको अर्थ बुझिन।

ग्रेगर्स : हो बुझ्दैनौ! म आफैलाई थाहा छः मेरो कुराको मतलब राम्रो छैन। हुन्छ त भोलि विहान म त्यो कमरामा आउँछु। (**गीनामट्टि हेर्दै**) मेरो कारणले तिमीलाई केही दुःख त हुँदैन। मेरो सब काम म आफै गर्छु । (**हजलमारलाई सम्बोधन गर्दै**) अच्छा, शेष कुरा भोलि गर्छु। नमस्ते। (**गीनापट्टि शिर झुकाउँछ औ हेदविग पट्टि पनि**) नमस्ते!

गीना : नमस्ते।

हेदविग : नमस्ते।

हजलमार : (**ममबत्ति जलाउँदै**) पर्ख, सिढ़ीमा अँध्यारो होला, उज्यालो वनाँऊ (**हजलमार र ग्रेगर्स सिँढ़िपट्टिको दरवाजाबाट निस्कन्छन्**)

गीना : (**हातको सिलाई काखमा राखेर शुन्यतामा हेर्दै**) हाँस उठदो विचार, कुकुर बन्ने कल्पना!

हेदविग : होइन, यो कुरा होइन, आमा म बताऊँ। वास्तवमा उसको अर्कै थियो।

गीना : अरू के मतलब हुन्छ?

हेदविग : यो त मलाई थाहा भएन तर उ अचम्भको कुरा गर्दैथ्यो। भन्नु त केही कुरा भन्यो तर उसको मतलब अर्कै थियो।

गीना : तिमीलाई यस्तो लाग्यो? हो केही अचम्भको ढंग थियो।

हजलमार : (**फर्केपछि**) सिँढ़ीमा अहिलेसम्मबत्ति बलिरहेको थियो (**ममवत्ती निभाएर एकापट्टि राख्छ**) खैर अब त केही न केही खानेकुरा पाइन्छ (**मखन रोटी खान्छु**) अच्छा गीना, मेरो कुरा सुन। यदि समझदारीले काम लियौ भने

गीना : के मतलब, कसरी समझदारीसित काम लिनु?

हजलमार : हेर, भाग्यले गर्दा कमसेकम कमरा त किरायमा उठ्यो। औ किरायादार पनि—ग्रेगर्स आफ्नो पुरानो मित्र हो।

गीना : राम्रो भयो। म के भनुँ, यो मामला म बुझ्न सक्तिन।

हेदविग : होइन आमा, यो एकदमै राम्रो हुन्छ।

हजलमार : तिमीले पनि बुझ्न सक्तैनौ। दस मिनट अघि किरायदार नपाँउदा चिन्तित थियौ अनि अहिले कमरा किरायमा दिन चाँहदैनौ।

गीना : मैले कमरा किरायमा नदिनु भनेर कहिले भने? तर उसलाई कसरी राख्नु। अर्कोकुनै मानिस हुनसक्तैन? तिमी सोच्दैनौ उसको

पिताले के भन्छ।

हजलमार : वर्ल साहब, हाम्रो काममा उसको दखल किन?

गीना : बाबु छोरामा झगड़ा भएको स्पष्ट देखिन्दैछ। छोरा घर बाबु दुवै छोड़न चाहन्छ। उसित हुँदैन।

हजलमार : अच्छा मानिलेऊ, यही कुरा भए फेरि··· ।

गीना : यस्तो अवस्थामा उसको बावुलाई शंका छुन्छ कि तिमीले उसलाई भड़काएको हो भनेर।

हजलमार : उसले शंका गर्छ भने गरोस्। म मान्छु वर्ल साहेबले मेरो लागी धेरै कुरो गरिदिएको छ। मैले ठूलो गुण मानेकोछु। तर यसको अर्थ यो होइन कि हर काममा म उसको अनुमति लिऊँ।

गीना : तर तिमी पिताजीको कुरा पनि विचार गर। उसलाई नोक्सान हुन सक्छु। दफतरमा उसलाई अलि अलि भए पनि काम दिन्छ। सो पाँउदेन। जति पैसा हुन्छ त्यो पनि पाउँदैन।

हजलमार : म चाहन्छु यो झगड़ा खत्म होस्। तिमीलाई थाहा छैन उनीहरू पिताजीसित कस्तो दुर्व्यवहार गर्छन्। म जस्तो मानिसको लागी के यो अपमानजनक होइन? म जान्दछु यसरी अब चल्दैन भनेर।(**रोटी अर्को टुक्रा लिएर मखन लाँउछ**) मेरो जीवन को एउटा लक्ष्य छ अनि म त्यो पूरा गर्न चाहन्छु।

हेदविग : हो पापा, जरूर पूरा गर्नुपर्छ।

हजलमार : (**शोर दवाएर**) म भन्दैछु, आफ्नो लक्ष्य पूरा गर्नेछु। समय आँउछ, जब, जब, यसैले कमरा किरायमा गएको राम्रो। यसो भए म आफ्नो खुट्टामा उभिन सक्छु। जसको जीवनमा आपनो लक्ष्य छ, उ अरू माथि निर्भर गर्न असल होइन। (**वूढ़ोको चौकीको नजिकमा गएर उभिन्छ र द्रवित शोरमा भन्छ।**) मेरो अभागी पिता, विश्वास राख, तिम्रो छोरोले तिम्रो बुढेस्कालको बोझ सम्हाल्न सक्छ। तिमीलाई सहारा दिनुसक्छ। कमसेकम यति सामर्थ्य उसमा छ। एक दिन दुनियाँले देख्नेछ। (**गीना पट्टि हेरेर**) के तिम्रो ममाथि भरोसा छैन?

गीना : (**चौकीबाट उठ्दै**) किन छैन, मलाई त पूरा विश्वास छ। तर पहिले (बूढ़ोलाई संकेत गर्दै) उसलाई उठाएर ओछयानमा लैजाऊँ।

हजलमार : हो, हो, ठीक भन्यो, आऊ सहायता गर।

*दुवै मिलेर सावधानीसित सुतिरहेको बूढ़ोलाई उठाउने कोशिश गर्छन्।*

# तेस्रो दृश्य

[ भोलिपल्ट प्रातःकाल। हजलमार एकदलको स्टडियोमा। स्टुडियोको ढालिएको छानामा ठूलो खिरकीवाट निलो पर्दा हटाएकोछ। खिरकीबाट विहानको घाम आइरहेकोछ। हजलमार टेवलमा बसेर एउटा फोटोग्राफ ब्रशले सुधार्दैछ। उसको सामने अरू पनि फोटोग्राफहरू राखिएकोछ। केही क्षण पछि सिँढ़ीको दरवाजाबाट गीना प्रवेश गर्छे। गीना बजारबाट फर्केकी छ। उसको शिरमा टोपी र कुममा सानो वस्त्र छ। उसको हातमा बजार गर्ने टोकरी झुण्डिएकोछ। टोकरी छोपिएकोछ। ]

हजलमा : गीना फर्क्यौ पनि?

गीना : हो, आज त मेरो धेरै काम छ।

*झोलोंगो एउटा चौकीमा राखेर टोपी र कुमको वस्त्र उतार्न थाल्छे।*

हजलमार : ग्रेगर्सको बाट भएर आयौ, ठीक ठाक त होला, होइन।

गीना : हो गएकी थिएँ। अच्छा तमासा गरी राखेको उसले। आउनेसाथै कमरामा सब गड़बड़ गरिदियो।

हजलमार : किन के गरि दियो?

गीना : तिम्रो सामुन्ने भनेको थियो उसले काम सबै म आफै गर्छु भनेर। आउनसाथै कमरा गरम गर्नलाई अँगेटी सल्कायो, कमरामा धुँवै धुँवा छ, दुर्गन्ध आउन लागेकोछ।

हजलमार : मेरो कसम।

गीना : त्यो माथि अरू तमासा गर्‍यो। धुवाँले उकुस-मुकुस भएपछि, अँगेटी निभाउन थाल्यो। बाल्टी उठाएर अँगेटीमा फ्याँकीदियो जसले गर्दा पुरा कमरामा खराबी र कोइलाको मैलाले भरियो।

हजलमार : के यस्तो समस्या!

गीना : मैले चौकीदारनीलाई बोलाएर कमरा धुनु लगाएकोछु। दिउँसो सुकेर मात्र वस्न लायकको हुन्छ, सुंगुर हो त्यो।

हजलमार : अहिले को गर्दैछ त्यो ?

गीना : भन्दैथ्यो, घुम्नु बाहिर एक किन जान्छु।

हजलमार : तिमी वजार गएपछि म पनि एक छिन उसकोमा गएको थिएँ।

गीना : हो भन्दैथ्यो। तिमीले दिउँसो उसलाई यहाँ खानु बोलाएकोछौ।

हजलमार : हो अलिकति, केही गरौं। जान्दछौ आज उसको पहिलो दिन हो। यति त गर्नै पर्छ। घरमा तिम्रो केही त होला।

गीना : अहिले हेर्छु, के हुन सक्छ।

हजलमार : हेर, खानेकुरो कम्ति नबनाऊ। मेरो विचारमा रेलिङ र मौलविक पनि आउँछ होला। रेलिङलाई सिँढ़ीमा भेटेकों थिएँ, भन्नै पर्‍यो।

गीना : दुवैले यहाँ खान्छ?

हजलमार : भगवानले भला गरोस, के फरक पर्छ। जहाँ दुइ जनाको खाना बनिन्छ, त्यहाँ तीन वा चार जनाले खाँदा केही फरक पर्दैन।

*बूदा एकदल आपनो कमराको खिरकी खोलेर स्टुडियो तिर हेर्छ।*

एकदल : हजलमार, एक छिन सुन (**गीनालाई देखेर**) ओहो।

गीना : पिताजी, तपाईलाई केही चाहिन्छ?

एकदल : होइन, होइन, केही होइन (**आफ्नो कमरामा फर्कन्छ।**)

गीना : (**झोलोंगो उठाएर हजलमार पट्टि हेर्छे**) अलिक याद गर, यिनी बाहिर जान्छ कि।

हजलमार : हो म ध्यान राख्छु। गीना, सुन, मेरो विचारमा हेरिङ माछाको अलिक सलाद बनाऊ, मजा आउँछ। मलाई थस्तो लाग्योकि हिज राती रेलिङ, र मोलविक त्यो सलादको खुब कुरा गर्दैथ्यो।

गीना : हेरिंग माछाको सलाद बनाउन केही समय लाग्छ यो विचमा उनीहरू आइपुगे!

हजलमार : होइन, किन छिटो आउँछ तिमी आरामसित बनाऊ।

गीना : ठीक छ, भइहाल्छ। तब सम्म तिमीले पनि केही काम गर।

हजलमार : देख्दैनौ, विहानदेखि गर्दैछु। जति हुनसक्छ गर्दैछु।

गीना : हो, यो काम तिमी गरेरनै छोड़छौ।

*गीना झोलोंगो लिएर भान्साघरमा जान्छे। हजलमार इच्छा नगरीकन केही काम गर्न लाग्छ।)*

एकदल : (**बूढो खिरकी खोलेर फेरि हेर्छ**) स्टुडियोको चारैपट्टि हेरेर दविएको स्वरमा सोध्छ तिम्रो काम पुरा भयो?

हजलमार : म यी चित्रहरू बनाउदैछु।

एकदल : अच्छा, अच्छा ठीक छ। तिमीलाई अहिले फुर्सद नभए, राख।

*बूढ़ा खिरकी खुला छोड़ेर फर्कन्छ। हजलमार केही बेर मौन भावले काम गर्न ला छ औ फेरि टेबलमा ब्रश राखेर दरवाजा पट्टि जान्छ।*

हजलमार : के गर्नु हुँदैछ पिताजी?

एकदल : **(भित्रबाट बूढोको खिन्न स्वर सुनिन्छ)** तिमीलाई फुर्सद छैन भने मलाई पनि छैन।

हजलमार : एकदमै राम्रो, ठीक छ **(हजलमार फरि काम गर्न लाग्छ। केही क्षणपछि बूढो फेरि कमरामा आउँछ)**

एकदल : हूँ, सुन हजलमार म त्यसै बसिरहेको थिएँ।

हजलमार : मैले सम्झेको थिएँ, तपाई लेखदै हुनु हुन्छ।

एकदल : उनको काम जतासुकै जावस्। दिन दुइ दिनमा उसको के बिग्रन्छ, उसको कुन ज्यान निस्कन्छ?

हजलमार : केही होइन, के हुन्छ, तपाई उसको नोकर त होइन।

एकदल : हो, मैले तिमीलाई त्यो कुरा भनेको थिएँ, त्यो गर्नुपर्छ।

हजलमार : हो याद छ, उता जानुहुन्छ म खिरकी खोली दिऊँ?

एकदल : सोच्दैछौ, गरी त हाल्दैन?

हजलमार : **(उठेर)** राम्रो हुन्छ, काम सकौ।

एकदल : हो भोलि बिहानसम्ममा तयार हुनुपर्छ। हामीले यही ठीक गरेकाछौं।

हजलमार : हो, भोलि सम्ममा हुनुपर्छ।

*बूढो र हजलमार एक एकवटा खिरकी भित्तमा ठेल्छन्। बुँइगल को छानाको खिरकीबाट घाम आएको देखिन्छ। केही परेवा यता उता उड़ेको देखिन्छ केही कुरर कुरर गर्दै घरका धुरीमा छन्। घरि-घरि कुखुराको आवाज सुनिन्छ एक कुनाबाट।*

हजलमार : लिनुहोस पिताजी, खोली दिएँ, तपाई शुरू गर्न सक्नु हुन्छ।

एकदल : **(भित्र पस्दै)** तिमी आँउदैनौ?

हजलमार : म के बताऊँ, मेरो बिचार थियो **(भान्सा घर को दरवाजामा उभिएकी गीनालाई देख्छ)**। मलाई अहिले फूर्सद छैन। मलाई काम पुरा गर्नुछ। तर म यसलाई ढंगसित लगाँउछु।

*उसले एउटा डोरी तानेर बुँइगल मा पर्दा झार्छ। पर्दाको माथिल्लो भागमा माछा मार्ने जाली छ, तल्लो भागमा नावको पुरानो पालको टुक्रा लगाएकोछ। पर्दा झार्दा बुइँगलको भूँइ देखिन्दैन। लिनुहोस् भयो, अब म केही बेर बसेर काम गरूँ।*

गीना : बूढ़ो त्यहाँ गएर फेरि उल्टा पुल्टा गर्दैछ।

हजलमार : तब फेरि के चाहन्छौ, रक्सी दोकानमा गाएर रक्सी पिउन दिन

**(चौकीमा बसेर)** किन, केही भन्न चाहन्छौ? के हेर्दै छौ?

गीना : केही होइन, भन भोजन यहाँ टेबलमानै लगाऊँ।

हजलमार : हो अनि के? यहाँ को ठूलो मान्छे फोटो खिँच्न आउँदैछ र यहाँ जगह हुँदैन।

गीना : हो, यस्तै केही आशा छ। बस, उही जोड़ी आउनेवाला छ, जसको विहे भएको छ। एक साथ फोटो बनाउन चाहन्छ।

हजलमार : उसलाई के यस्तो समस्या आइलाग्यो! उनीहरू अरू कुनै दिन आउन सक्दैन।

गीना : के अप्ठ्यारो छ। उनीहरूलाई बाह्र बजे पछि आउनु भनेकोछु। तिमी त्यस समय सुतिरहे को हुनेछौ।

हजलमार : यो एकदमै राम्रो गर्‍यौ, भोजन यही बसेर गर्छौं।

गीना : बस ठीक छ, अहिलेनै टेवल लगाउने के आवश्यकता छ। पुरा समय छ, तिमी काम गर।

हजलमार : तिमी देख्दैनौ, म जब टेबलमा काम गर्ने मौका पाउँछु, कहिले चुकाउदिन।

गीना : काम भइ हाले राम्रो हुन्छ, तिमीलाई फुर्सद हुन्छ **(भान्सा घरमा जाँदा एकछिन रोकिन्छ)**

एकदल : **(बुँइगलमा जालको पर्दाको पछि उभिएर)** हजलमार!

हजलमार : ज्यू, के भो?

एकदल : के बताऊँ, पानीको भाँडा त हटाउनैपर्छ।

हजलमार : ज्यू हो, यो त मैले पहिलेनै भनेको थिएँ।

एकदल : ओ हो, **(बूढ़ो दरवाजाबाट पर हट्छ)**

*हजलमार केही बेर शिर झुकाएर काम गरी रहन्छ। उसको आँखा बुँइगल पट्टि माथि उठेको हुन्छ। उनी कुर्सीबाट उठन लाग्दा भान्सा घरबाट हेदविग आउँछे। छोरीलाई देखी हजलमार फेरि चौकीमा बस्छ।*

हजलमार : किन के भो?

हेदविग : केही होइन, त्यसै। तपाईकोमा आएकी!

हजलमार : **(अलिक दिक्क मान्दै)** किन, यहाँ हेर्ने के छ? आमाले मलाई जाँच्न पठाएको?

हेदविग : होइन, एकदमै होइन।

हजलमार : तिम्रो आमा भान्सा घरमा के गर्दैछे?

हेदविग : आमा हेरिंगको सलाद बनाउदैछे **(टेबलको छेउमा नजिक आएर)** पापा मलाई भन्नुहोस् म पनि केही गरूँ।

हजलमार : होइन होइन, काम मलाईनै गर्नुपर्छ। सबै काम मैले गर्नुपर्छ। जब सम्म मेरो शरीरमा शक्ति छ, म गर्छु नै। मलाई सहायता को कुनै जरूरत छैन। बस् मेरो हात खुट्टा चलिरहोस् मै सब कुरो गर्छु।

हेदविग : पापा, के भन्दै हुनुहुन्छ, कस्तो उल्टा कुरा गर्दै हुनुहुन्छ (**हेदविग कमरामा एक चक्कर लगाएर बुँइगल पट्टि दरवाजामा उभिएर उता हेर्छे**)

हजलमार : पिताजी त्यहाँ के गर्दै हुनुहुन्छ?

हेदविग : पानीको भाँड़ा भएसम्म नयाँ बाटो बनाएको जस्तो लाग्यो।

हजलमार : उनी एक्लैले बनाउन सक्तैन। यो पनि एउटा समस्या, म बसेरनै यो एक काम गर्नु पर्नै औ…

हेदविग : (**पिताको छेउमा आँउछे**) पापा, ब्रश मलाई दिनुहोस्। यो त म पनि गर्न सक्छु, गर्न सक्छु होइन?

हजलमार : व्यर्थको कुरा गर्दैछौ, तिम्रो आँखा दुख्न थाल्छ।

हेदविग : आँखा दुख्दैन, ब्रश मलाई दिनुहोस्।

हजलमार : (**उभिन्छ**) अच्छा, मलाई मिनट दुइ मिनट भन्दा बेसी लाग्दैन।

हेदविग : ऊ, यति कामले आँखालाई के हुन्छ? (**पिता-बाट-ब्रश लिन्छ**), अच्छा त (**टेबलमा बस्छे**) म यस फोटोजस्तै बनाइदिन्छु।

हजलमार : तर आँखालाई थकाउनु हुँदैन। सुन्दैछस्। हेर मैले केही भनेको छुइन। तिमी आफै काम गर्दैछौ। जान्दछौ!

हेदविग : (**काममा ध्यान दिंदै**) हो हो जान्दछु।

हजलमार : श्याबास, बड़ो होशियार केटी छ। म अहिले आँउदैछु, मिनट दुइ मिनटमा।

*उ निहुरेर जालको मुनिबाट बुँइगल जान्छ। हेदविग तन्मयतापूर्वक काम गरी रहन्छे। हजलमार र बूढ़ो बातचित गरेको सुनिन्छ।*

हजलमार : (**जालपट्टि अघि सरेर**) मलाई चिम्टा दिन्छौ आलमारीमा छ। छिन पनि देऊ (**घुमेर बुँइगल पट्टि हेर्छ।**) पिताजी पर्खनु होस् म बताँउछु। मेरो मतलब हो…(हेदविग औजारहरू ल्याएर पितालाई दिन्छे) श्याबास छोरी, हैस्यौ तिमीले, राम्रो भो म आएको।

*बुँइगलमा जान्छ। बुँइगलबाट ठाकठुगको आवाज औ बातचित गरेको आवाज सुनिन्छ। हेदविग उभिएर पिताजी लाई हेर्छे। केही क्षणपछि बाहिरको धैलोमा कसैले खटखटाँउछ। हेदविगले त्यसपट्टि उत्ति ध्यान दिदैन।*

ग्रेगर्स : **(सिँढ़ीको दरवाजावाट भित्र आएर पलभर मौन भएर उभिरहन्छ। उसले टोपी र ओवरकोट लाएको छैन। अलिक खोकेको जस्तो गर्छ)** अहम।

हेदविग : **(अर्को पट्टि फर्केर)** नमस्ते, आउनोस् आउनोस्।

ग्रेगर्स : धन्यवाद! **(बुँइगलमा हेर्छ)** के भित्रकाम लाग्दैछ, बढ़ाई काम गर्दैछ?

हेदविग : होइन, पापा र पिताजी हुनुहुन्छ। तपाई बस्नुहोस् म बोलाउँछु।

ग्रेगर्स : होइन, के आवश्यकता छैन। उनीहरूलाई काम गर्न देऊ। **(सोफामा बस्छ)**

हेदविग : यहाँ यत्रो विघ्न सामानहरू फिजिएकोछ, राम्रो देखिन्दैन **(टेवलमा फोटोग्राफहरू सम्हाल्न लाग्छे।)**

ग्रेगर्स : रहन देऊ, केही बात छैन। के यी चित्रहरू पुरा गर्नुछ?

हेदविग : हो, केही काम बाँकी छ। म पिताजी को साथ काम गर्दैछु।

ग्रेगर्स : तिमी आपनो काम गर। म रोक्दिन।

हेदविग : होइन, बाधा के हो?

*फेरि ब्रश लिएर काममा ध्यान दिन थाल्छे। ग्रेगर्स मौन केटीपट्टि ध्यानपूर्वक हेर्छ।*

ग्रेगर्स : जंगली हाँस राती राम्रै बस्यो?

हेदविग : ज्यू, धन्यवाद। मेरो विचारमा राम्रै बस्यो।

ग्रेगर्स : **(बुँइगल पाट्टे हेरेर)** अब दिउँसो यो जगह एकदमै अर्कै लाग्दैछ। चाँदनी रातमा त्यति स्पष्ट देखिएको थिएन।

हेदविग : ज्यू, कहिले कस्तो देखिन्छ अनि कहिले एकदमै फरक। विहान यस्तै हुन्छ, साँझमा फेरि अर्कै। बर्खाको समयमा हेर्नुभो भने अनुमान गर्न सक्नु हुन्न घाममा कस्तो देखिन्छ।

ग्रेगर्स : अच्छा तिमीले यो ध्यानपूर्वक हेऱ्यौ?

हेदविग : ज्यू, म त हेरिरहन्छु।

ग्रेगर्स : तिमी पनि जँगली हाँसको हेर्चाह गर्छौ? तिमीलाई जँगली हाँस मन पर्छ?

हेदविग : ज्यू, जब म उसको छेउमा जान्छु तब त्यसलाई प्यारो गर्छु।

ग्रेगर्स : तर तिमीलाई कमनै अवसर मिल्छ होइन! स्कूल पनि त जान्छौ होइन?

हेदविग : होइन, अब मा स्कूल जाँदिन। पिताजी भन्नुहुन्छ पढ़दा मेरो आँखा बिग्रन्छ।

ग्रेगर्स : कुरा यो हो, त्यसो भए स्वयं उसैले तिमीलाई पढ़ेर सुनाँउछ होला।

हेदविग : कति चोटि पढ़ेर सुनाउछु भन्यो तर अहिलेसम्म उसलाई समय भएको छैन।

ग्रेगर्स : तिमीलाई सहायता गर्ने अरू कोही छैन?

हेदविग : ज्यू मि. मौलविक छ, तर उ सँधैनै''' यस्तै रहन्छ के भन्छ'''

ग्रेगर्स : तिम्रो मतलब हो, ठीकसित ध्यान दिँदैन?

हेदविग : ज्यू, मतलब यही हो।

ग्रेगर्स : म सम्झन्छु, त्यसो भए तिमीलाई खुब फुर्सद होला। मलाई लाग्छ यहाँ तिमीहरूको आफ्नै दुनियाँ छ, होइन!

हेदविग : ज्यू, यहाँ हाम्रो विचित्र विचित्रका बस्तुहरू छन्।

ग्रेगर्स : अच्छा, यस्तो छ?

हेदविग : ज्यू, ठूल्ठूला आलमारीमा धेरै पुस्तकहरू छन्। धेरै पुस्तकमा चित्रहरू पनि छन्।

ग्रेगर्स : यो कुरा हो?

हेदविग : एउटा ठूलो पुरानो टेबल छ। त्यसमा धेरै खाना र दरवाजाहरू छन्। एउटा ठूलो घड़ि पनि छ। त्यसमा घण्टा बज्छ र अंक देखिन्छ। तर घड़ी अहिले बन्द छ।

ग्रेगर्स : घड़ीमा समय पनि अल्झिएको छ? यस बाहेक जंगली हाँस पनि त छ।

हेदविग : ज्यू, चित्र बनाउने रंगको एउटा ठूलो बाकस पनि त छ। अरु पनि कति चीजहरू र धेरै पुस्तकहरू पनि छन्।

ग्रेगर्स : पुस्तक पढ़नु तिमीलाई मन पर्छ?

हेदविग : ज्यू, पढ़नु मलाई मन पर्छ। धेरै पुस्तकहरू अंग्रेजीमा छन्, म अँग्रेजी बुझदिन। ती पुस्तकहरूको चित्रहरू हेर्छु। एउटा ठूलो पुस्तक छ। उसको नाम छ 'लन्दन को इतिहास'। हेरीसनले लेखेको हो। सय वर्ष पुरानो पुस्तक हो। त्यसमा धेरै चित्रहरू छन्। पुस्तकको शुरूमा 'मृत्यु' को चित्र छ। त्यस चित्रमा एउटी युवती छ। उसको हातमा बालुवा घड़ी छ। मलाई त्यो चित्र मन पर्दैन। अरु पनि चित्रहरू छन्—महलहरू, गीर्जा, बजार र समुद्रमा हिड़्ने ठूला-ठूला जहाजहरू।

ग्रेगर्स : अब यो बताऊ, तिमीहरूको यी विचित्र बस्तुहरू कसरी आए?

हेदविग : ज्यू यहाँ अघि एकजना बूढ़ा जहाजको कप्तान बस्थ्यो। उसले धेरै चीजहरू घरमा ल्याउँथ्यो। मानिसहरूले उसलाई हालैण्डको

'उड़न्ते' भन्थे। किन भन्थे यस्तो, उ होलैण्डको त थिएन।

ग्रेगर्स : अच्छा, उ होलैण्डको थिएन?

हेदविग : थिएन, फेरि एक दिन उ फर्केन, कहिले पनि, उसको सबै चीज यही हो।

ग्रेगर्स : अच्छा, यो बताऊ, तिमी यहाँ घरमा बसेर धेरै बस्तुहरूको चित्र हेर्छौ। जुन चित्रहरू हेर्छौ ती चित्रहरू संसारमा स्वयं हेर्ने इच्छा हुँदैन।

हेदविग : 'होइन, मलाई कहीँ जाने इच्छा छैन। आफ्नो घरमै बसेर आमा र पापा को मदत गर्छु।

ग्रेगर्स : फोटो बनाउनमा।

हेदविग : होइन, खाली फोटो होइन। अरू पनि काम गर्छु। अंग्रेजी पुस्तकहरूमा भएका चित्रहरू जस्तै बनाउन र सिक्न मलाई ठूलो इच्छा छ।

ग्रेगर्स : अच्छा, तिम्रो इच्छा पापालाई भन्यौ। उसले के भन्यो।

हेदविग : पापाले यो मनपराँउदैनन्। थाहा छैन उनलाई किन यो मनपर्दैन। हेर्नुहोस् बड़ो विचित्रको कुरा गर्छन्। मलाई झोलोंगो र चटाइ बुन्ने काम सिक्नुपर्छ भन्दैछन्। के काम नलाग्ने कुरो हो। म त यसबाट केही फायदा देख्दिन।

ग्रेगर्स : मलाई पनि केही फायदा हुन्छ जस्तो लागेन।

हेदविग : तर पापाको कुरा माने एउटा लाभ हुनसक्छ। मैले झोलोंगो बनाउन सिके भने जंगली हाँसको लागी त्यसै झोलोंगो आइहाल्छ।

ग्रेगर्स : हो, तिमीले ठीक भन्यौ। तिमी चाहन्छौ, तिम्रो जंगली हाँस सुखी रहोस, ठीक हो।

हेदविग : ज्यू हो, जंगली हाँस मेरो हो।

ग्रेगर्स : हो, मलाई थाहा छ।

हेदविग : जंगली हाँस मेरै हो, तर पापा र पिताजी चाहन्छन् जंगली हाँसलाई आफ्नै बनाउन।

ग्रेगर्स : अच्छा, यही बात हो, के उनीहरू पनि जंगली हाँसलाई प्यारो गर्छन्।

हेदविग : उनीहरू यसको हेर्चाह गर्छन्। उनीहरूले यसको लागी बस्ने ठाउँ बनाँउछन् र यस्तै...

ग्रेगर्स : मैले बुझें, सबैले जंगली हाँसलाई खुब याद गर्छन्।

हेदविग : ज्यू हो, त्यो असली जंगली हाँस हो, पानीमा बस्ने। विचरा यहाँ विलकुल एक्लो छ। यहाँ उसको कोही साथी छैन।

ग्रेगर्स : तिमीले ठीक भन्यौ, तिम्रो खरायोको जस्तो उसको भाइ बहिनी पनि त छैन।

हेदविग : विचारा, एकदमै एक्लो छ। कुखुराहरू कतिको चिङ्नाहरू पनि थिए। जंगली हाँस यति टाढ़ोबाट आएको एक्लो छ। कति विचित्र पक्षीहरू जंगलबाट आएका छन्। कहाँबाट आयो कसैलाई थाहा छैन।

ग्रेगर्स : हो, विचरा अथाह गहराइसम्म डुबेर निस्केको हो।

हेदविग : (सहसा ग्रेगर्सको आँखा हेरेर मुस्कुराउँछे र सोध्छे) तपाईले अथाह गहराईसम्म किन भन्नु भयो।

ग्रेगर्स : किन के भन्नु पर्‍यो?

हेदविग : तपाइले 'समुद्र तल सम्म' भन्न सक्नु हुन्थ्यो।

ग्रेगर्स : 'अथाह गहिराइ' सम्मको अर्थ पनि त त्यही हो।

हेदविग : कसैले 'अथाह गहिराइ' सम्म भने मलाई विचित्र लाग्छ।

ग्रेगर्स : किन, यस्तो किन!

हेदविग : के कारण बताऊँ! मेरो मूर्खता सम्झनुहोस्।

ग्रेगर्स : होइन, यो मूर्खता होइन। बताऊ तिमी किन हाँस्दैछौ।

हेदविग : कारण यो हुन सक्छ कि जब म सोच्न लाग्छु तब सहसा एकदम यस्तो लाग्छ कि सब कुछ, यो पुरा कमरा औ जति चीज यहाँ छ सबै अथाह गहराइमा जान्छ। तर यसको अर्थ केही पनि हुँदैन।

ग्रेगर्स : होइन, यो भन्न सकिन्दैन।

हेदविग : अच्छा, तर यो त कमरा त हो।

ग्रेगर्स : **(कोटी पट्टि विशेष ध्यान दिएर)** यो तिमी पक्का भन्न सक्छौ।

हेदविग : **(छक्क परेर)** के निश्चयसित, यो कमरा हो भनेर।

ग्रेगर्स : हो, यो तिमी निश्चय भन्न सक्छौ।

*हेदविग विस्मयसित मौन रहन्छे, मुख खोलेर ग्रेगर्सपट्टि हेरिरहन्छ। गीना भान्साघरबाट आएर टेबलमा भोजन राख्ने व्यवस्था गर्छे।*

ग्रेगर्स : **(गीनाप्रति सम्मान जनाउन उभिन्छ)**—क्षमा गर्नुहोस, म निकै छिटो आएँ।

गीना : होइन, केही छैन। तपाईको कमरा राम्रो छैन, यहीं बस्नुहोस। भोजन पनि दुइचार मिनटमा तयार भइहाल्छ, हेदविग टेबल सफा गर। हेदविग र गीना टेबलका चीजबीजहरू मिलाउन लाग्छन् औ भोजनको लागी ठाउँ बनाउँछन्। ग्रेगर्स हातभएको चौकीमा बसेर

अल्बमका पन्नाहरू पल्टाउन लाग्छन्। उनीहरू आपस्तमा कुरा पनि गर्छन्।

ग्रेगर्स : भाउज्यू, सुनेको छु, तपाई पनि फोटोग्राफ रिट्च गर्नु हुन्छ।

गीना : के भन्नु भो, मैले तपाईको अभिप्रायः बुझिन।

ग्रेगर्स : मेरो अभिप्राय हो कि हजलमार फोटोग्राफी गर्छ। यो काममा उसलाई धेरै सहायता मिल्छ होला।

हेदविग : आमाले त फोटो पनि खिँच्छे।

गीना : हो, म फोटो पनि खिँच्छु, सक्छु। मैले यो काम सिकेकी छु।

ग्रेगर्स : तब त मेरो विचारमा यो धन्धा तपाईंनै चलाउनुहुन्छ?

गीना : हो, जब उसलाई फुर्सद हुँदैन तब म नै···।

ग्रेगर्स : म सम्झन्छु, उसको पिताजीलाई हेर्चाह गर्ने धेरै काम रहन्छ होला।

गीना : हो, उ जस्तो मान्छे, दिन भरीनै मानिसहरूलाई राखेर उनीहरूको फोटो लिने झन्झटमा बसिरहन्छ।

ग्रेगर्स : तपाई ठीक भन्नुहुन्छ, तर पनि उसले यो धन्धा गर्दैछ त।

गीना : भाइ साहब, तपाईलाई थाहा छैन, यो साधारण फोटोग्राफर होइन।

ग्रेगर्स : ठीक हो, मान्छु तर **(बुँइगलमा बन्दुक पड्केको आवाज सुनिन्छ, ग्रेगर्स तर्सिन्छ)** यो के हो?

गीना : ओ हो, उसले फेरि गोली चलायो।

ग्रेगर्स : के यहाँ पनि बन्दुक चल्छ।

हेदविग : शिकार खेल्दैछ।

ग्रेगर्स : **(छक्क परेर)** यो कस्तो तमाशा हो। **(बुँइगलको दरवाजामा जान्छ)** हजलमार, बन्दुक चलायौ।

हजलमार : **(जालको पर्दाको एक छेउबाट)** ओहो, तिमी आयौ, मलाई थाहा भएन। म यहाँ व्यस्त थिएँ **(हेदविग पट्टि हेरेर)** यो के। तिमीहरूले हामीलाई बताएनौ। **(स्टुडियोमा आउँछ)**

ग्रेगर्स : यहाँ बुँइगल मा बन्दुक लिएर शिकार गर्छौ।

हजलमार : **(एउटा दुइनाले पिस्तोल देखाँउदै)** केही होइन, यो पुरानो चीज हो।

गीना : कुनै दिन तिमी र पिताजी यो बन्दुकले गर्दा अप्ठयारोमा पर्छौ।

हजलमार : **(केही खिन्नतासित)** तिमीलाई याद छैन। तिमीलाई मैले कति चोटि भनि सकेकोछु। गोली चल्ने यो हतियारको नाम पिस्तोल हो।

गीना : अच्छा, पिस्तोलनै सही, त्यसले के बचाऊ हुन्छ।

ग्रेगर्स : हजलमार के तिमी पनि शिकारी भयौ।

हजलमार : होइन, हामी कहिले काहीं खरायो मार्छौ, तिमीलाई थाहा छ यो सब पिताजीको दिल बहलाऊ हो।

गीना : पुरुषहरूको विचित्रको ढंग हुन्छ, उनीहरूलाई दिलबहलाऊको लागी केही न केही चाहिन्छ।

हजलमार : **(रिसाएर)** हो, चाहिन्छ, जरूर चाहिन्छ। पुरुषहरूलाई दिलबहलाऊ चाहिन्छ नै।

गीना : म पनि त यही भन्दैछु।

हजलमार : खैर **(ग्रेगर्सलाई सम्बोधन गर्दै)** हेर, यो बड़ो सुविधाको कुरो हो कि बुँइगल यस्तो जगहमा छ यहाँ गोली चलाए बाहिर कसैले सुन्दैन। **(पिस्तोल आल्मारी माथि राख्छ, हेदविग, पिस्तोल नछुनु। याद गर, एक नालीमा कारतुस भरेकोछ)**

ग्रेगर्स : **(जालको पर्दाबाट हेर्दै)** तिम्रो यहाँ, शिकारी–ठूलो बन्दुक पनि उता राखेको छ।

हजलमार : त्यो पिताजीको पुरानो बन्दुक हो। त्यसबाट गोली चल्न सक्दैन। त्यसको थोड़ा बिग्रेको छ। त्यो त्यसै शौकको लागी राखिएको हो। यसलाई कहिले काँही खोलेर साफ गर्छ, तेल दिएर फेरि पूर्जाहरू जोड़छन्। ग्रेगर्स, यो त पिताजीको खिलौना हो।

हेदविग : **(ग्रेगर्सको छेउमा गएर)** अब तपाईले जंगली हाँस राम्ररी देख्न सक्नुहुन्छ।

ग्रेगर्स : हो, म त्यसैलाई हेर्दै थिएँ। उसको एउटा पखेटा अलिक झरेको छ।

हजलमार : त्यो त हो, त्यही पखेटा पट्टि त चोट लागेको हो।

ग्रेगर्स : एउटा खुट्टा अलिक घसार्छ होइन?

हजलमार : तर मामुली, एकदमै मामुली!

हेदविग : हो कुकुरले त्यही खुट्टामा टोकेर पकड़ेको थियो।

हजलमार : तर अरू खराबी केही छैन। तिमी सोच कारतुसको पुरा ज़ोड़ यही पखेटामा परेको थियो र कुकुरको मुखबाट बाँच्यो।

ग्रेगर्स : **(हेदविग पट्टि हेरेर)**–अनि कस्तो अथाह गहिराइमा डुबेको थियो होला।

हेदविग : **(मुस्कुराउँदै)** ज्यू हो।

गीना : **(टेबलको छेउमा उभिएर)**–राम्रो होस जंगली हाँसलाई। यसको लागी पुरा घरनै उल्टा पुल्टा भएकोछ।

हजलमार : हो, भोजन कहिले पाइन्छ।

गीना : अहिले हुन्छ, हेदविग यता आऊ, केही काम गर।

*गीना र हेदविग भान्सा घरमा जान्छन्।*

हजलमार : (**स्वर दबाएर ग्रेगर्सपट्टि**)—मेरो विचारमा तिमी यता बसे सायद राम्रो होला। यहाँ उभिए तिम्रो नजर पिताजी पट्टि जान्छ। उसलाई यो मन पर्दैन (**ग्रेगर्स बुँइगलको दरवाजाबाट हट्छ**) अरू मानिसहरू आउन भन्दा अघिनै दरवाजा बन्द गरिदिन्छु—यही राम्रो होला। (**स्टुडियोपट्टि आएको खरायोलाई डर देखाउँछ।**) यो जम्मै व्यवस्था मेरो नै आविष्कार हो। मनमा नयाँ चीज बनाउँदा ठूलो सन्तोष हुन्छ। विग्रेको कुरो बनाउन बड़ो इच्छा हुन्छ। यो बिना यहाँ काम पनि त चल्दैन। तिमी जान्दछौ, मलाई गीनाले खरायो र कुखुराको स्टुडियोमा जान दिदैन!

ग्रेगर्स : हो, कसरी आउन दिन्छ! मेरो विचारमा स्टुडियोमा भाउज्यूको राज छ।

हजलमार : मामुली काम त म उसैलाई छोड़ी दिन्छु। यसरी दफ्तरमा मलाई मेरो आवश्यक काम विषय सोच्ने अवसर पाउँछु।

ग्रेगर्स : यो कस्तो काम हो हजलमार।

हजलमार : अचम्भ त यो कि तिमीले अहिलेसम्म मलाई यो कुरो सोधेको छैनौ। तर मेरो आविष्कार बारे तिमीलाई कसैले केही बताएको छैन।

ग्रेगर्स : आविष्कारको बारेमा, केही पनि कसैले भनेन।

हजलमार : साँचैनै? तिमीले केही सुनेनौ? कुनै ठूलो कुरो छैन। तिमी त टाड़ो गाउँतिर थियौ···।

ग्रेगर्स : तिमीले केही आविष्कार गरेको छौ?

हजलमार : अहिले पुरा त भएको छैन तर सक्दो परिश्रम गर्दैछु। तिमी आफैले सम्झनु पर्ने कि मैले फोटोग्राफीको काम सँधै मानिस र फूलबारीको मात्र चित्र बनाइरहूँ।

ग्रेगर्स : ठीक भन्दैछौ, भाउज्यू पनि यही भन्दैथिइन्।

हजलमार : मैले ब्रत लिएकोछुकि आफ्नो शक्ति यस धन्धालाई लगाइ, महत्त्वपूर्ण बनाउँछु जसमा कला र विज्ञान दुवै बनोस्। त्यसैले मैले यस्तो महत्त्वपूर्ण आविष्कार गर्ने निश्चय गरें।

ग्रेगर्स : तिम्रो आविष्कार कस्तो प्रकारको छ? त्यसको के प्रयोजन छ?

हजलमार : मित्र, अहिले तिमीलाई पूरा विवरण त दिन सक्तिन, बताउनु पनि समय लाग्छ। तिमीले यो नसम्झ कि म आविष्कारक भएको

अहंकारले यो भन्दैछु। विश्वास राख, मेरो यसमा केही स्वार्थ छैन, पटक्कै छैन। मैले जीवनको एक लक्ष्य बनाएकोछु। यही लक्ष्य दिन-रात मेरो मस्तिष्कमा रहन्छ।

ग्रेगर्स : यो कस्तो लक्ष्य हो।

हजलमार : तिमीले मेरो बूढ़ो, अभागी पितालाई विर्स्यौ!

ग्रेगर्स : अभागी बूढ़ो पिता? भुलेको छुइन तर तिमी उसको लागी के गर्न चाहन्छौ।

हजलमार : म आफ्नो वंशको नामको प्रतिष्ठा र सम्मान--बढ़ाएर पिताको आत्म सम्मानलाई पुनर्जीवित गर्न चाहन्छु।

ग्रेगर्स : अच्छा त तिम्रो जीवनको यही लक्ष्य हो।

हजलमार : म चाहन्छु कि आफ्नो पिताको जीवन मझधारमा डुब्नदेखि बचाउँन सकुँ। दुर्भाग्यको तुफानलेनै उसको जीवनको नाव बगाएको हो। उसको विरुद्ध त्यो अभागी मामलाको जाँच शुरू हुनसाथै उ लँगड़ो भयो, उसको व्यक्तित्व समाप्त भयो। यही पिस्तोल जसले हामी खरायोको शिकार खेल्थ्यौ, हाम्रो परिवारको दुखान्त नाटकमा भाग लिएसकेको छ।

ग्रेगर्स : यो पिस्तोल, कसरी?

हजलमार : जुन समय उसलाई अदालतमा जेलको दण्डको निर्णय सुनाएको थियो, त्यस समय यो पिस्तोल उसकै साथमा थियो।

ग्रेगर्स : के यो पिस्तोलले?

हजलमार : हो, चाहन्थे, तर उसले साहस गर्न सकेन। त्यस लाँछनाले उनको साहस र आत्माभिमान यति जर्जर भइ सकेको थियो, उ डरपोक भएको थियो। ग्रेगर्स तिमी त्यस अवस्थाको कल्पना गर्न सक्छौ। एक व्यक्ति जो स्वयं योद्धा हो, जुन योद्धाको परिवारमा दुइ पूर्वज लेफ्टीनेन्ट कर्नल, एक को बाद एक--दो लेफ्टीनेन्ट कर्नल भइ सकेकोछ, जुन व्यक्तिले नौवटा भालु--हरूको शिकार गरी सकेकोछ, उ कहिल्यै साधारण मानिस थिएन।

ग्रेगर्स : म बुझ्छु, राम्ररी कल्पना गर्न सक्छु।

हजलमार : तर म यस्तो कल्पना गर्न सक्तिन। तिमी अरू पनि सुन, यो पिस्तोलले हाम्रो परिवारको इतिहासको अरू एक घटनामा भाग लिइसकेकोछ। जुन समय पिताजीलाई जेलको वर्दी लगाएर ताला चाबीसित बन्द गरिएको थियो, मित्र, त्यो आघात मेरो लागी असह्य थियो। मलाई मेरो घरको खिरकी खोल्ने आँट सम्म थिएन। जव खिरकीबाट बाहिर हेर्थे तब घाम त्यस्तै प्रकारले

चम्केको देख्थे, यसरी म केही वुझदिन थिएँ। मानिसहरू कसरी वाटो घाटोमा वजारमा आफ्नो दैनिक जीवन हाँस्दै खेल्दै विताउँछन, म वुझदिन थिएँ। मेरो मस्तिष्क स्तब्ध भएको थियो अनि मलाई यस्तो लाथ्यो कि सम्पूर्ण सृष्टि पनि कुनै अभिशापले स्तब्ध भएको छ।

ग्रेगर्स : आफ्नो आमा मृत्यु भएको समय मलाई पनि यस्तै अनुभव भएको थियो।

हजलमार : त्यस मानसिक अवस्थामा एक पटक हजलमार एकदलले पनि यो पिस्तोल उठाएर यसको मुख आफ्नो छातीमा लगाएको थियो।

ग्रेगर्स : के तिमीले पनि।

हजलमार : हो।

ग्रेगर्स : तर तिमीले पिस्तोल चलाएनौ।

हजलमार : अहँ, संकटको त्यो समय मैले मेरो निर्वलता माथि विजय प्राप्त गरें। मेरो जीवन वाँच्यो। तर विश्वास गर यस्तो संकटमा जीवनको रक्षा गर्न सक्नु अदम्य साहस चाहिन्छ।

ग्रेगर्स : हो, हुन सक्छ, यो दृष्टिकोणमा निर्भर गर्छ।

हजलमार : होइन, होइन, यसमा सन्देहको कुरै छैन, त्यही उचित थियो। जव चाँडैनै मेरो आविष्कार पूर्ण हुन्छ रेलिङको विचार छ अनि मलाई पनि विश्वास छ कि पिताजी फेरि वर्दी लाउन सक्नुहुन्छ। म आफ्नो आविष्कारको प्रतिफलमा केवल यही पुरस्कार माग्नेछु।

ग्रेगर्स : ओहो, सब वात वर्दी कै छ, तब ऊ···।

हजलमार : हो हो, यही उसको सपना छ। यही उसको कामना र महत्त्वाकांक्षा छ। तिमी कल्पना पनि गर्न सक्दैना, त्यस विचारले मेरो हृदय कति छिया छिया हुन्छ। जव कुनै उत्सवको अवसर हुन्छ, प्रसन्नताको कुनै दिन हुन्छ, हामी आफ्नो विवाहको वर्षगाँठ मनाउछौं, वा अरू कुनै खुशीको दिन हुन्छ तव बूढो आफ्ना राम्रा दिनहरूको स्मृतिमा उही फौजी वर्दी लगाउँछ। तर त्यस समय वाहिर दरवाजामा कुनै पनि आवाज आए, वूढो लरखराउँदै भागेर आफ्नो कमराभित्र परछन्। तिमीलाई थाहा छ अरू मानिसहरूको सामुन्ने उसले वर्दी लाउने साहस गर्दैन। तिमी सोच, पिताजीको यस्तो अवस्था देखेर छोरोको मन कस्तो हुन्छ।

ग्रेगर्स : कस्तो अनुमान गर्छौ। तिमी आफ्नो आविष्कार कहिलेसम्ममा पूर्ण गर्छौ।

हजलमार : केही भन्न सक्तिन, भगवाननै जान्दछन्। कहिलेसम्म पूर्ण हुन्छ,

दिन गनेर कसरी बताऊँ। जुन मानिसमा आविष्कारको प्रतिभा छ, उ आफैले पनि प्रतिभाको निर्देशन गर्न सक्तैन। प्रतिभा त जान्दछौ, प्रेरणामा निर्भर गर्छ। बुझने केही क्षण हुन्छ। त्यो क्षण कहिले आउँछ यो बताउन कठिन पर्छ।

ग्रेगर्स : तर म बुझछु, तिमीलाई धेरै सफलता प्राप्त भइसकेकोछ।

हजलमार : निश्चयनै, म सफल हुँदैछु। म प्रतिदिन त्यसमाथि आद्यन्त विचार गरिरहन्छु। मेरो लागी त्यस वाहेक अरू केही छैन। दिउँसो, भोजनको पछि म दफ्तर भित्रबाट बन्द गर्छु। त्यहाँ म निर्बिघ्न विचार गर्न सक्छु। तर छिटो सक्ने आशा मबाट नगर्नु, उचित होइन। त्यसबाट केही लाभ छैन। रेलिङ पनि यसै भन्छ।

ग्रेगर्स : तर तिम्रो के विचार छ। बुँइगलमा भएको कति चीजबीजहरूले तिम्रो ध्यानमा बिघ्न बाधा पुरयाउदैन।

हजलमार : होइन होइन, कहिले पनि होइन, कुरो ठीक उल्टा छ। तिमीलाई यो विचार कसरी आयो? यो कसरी सम्भव हुनसक्छ कि म त्यो थकाउने गम्भीर विचारको भुँवरीमा निरन्तर डुबी रहूँ। मलाई प्रेरणाको क्षणको पनि प्रतीक्षा गर्नुपर्छ। प्रेरणाको प्रतीक्षा गर्दा ती शून्य क्षणमा पनि त केही गर्नु आवश्यक छ। म जो पनि गरौ, त्यो गम्भीर आउँछ, प्रेरणाको त्यो स्फुलिङ दबिन सक्दैन।

ग्रेगर्स : सुन मित्र, मलाई लाग्दैछ तिमीमा पनि जंगली हाँसको प्रवृत्ति छ।

हजलमार : जंगली हाँसको प्रवृत्ति? तिम्रो के विचार छ?

ग्रेगर्स : तिमीले गहिरो गोता लगाएको छौ, जंगली हाँस जस्तो तल झारणत लेउमा चुचो डुबाएर त्यँही अड्केको छौ।

हजलमार : मेरो विचार छ, तिम्रो अभिप्राय त्यही मर्मान्तक आघातसित छ जसले गर्दा पिताजी र म मरेनौ तर जर्जर भयौं।

ग्रेगर्स : होइन, मेरो अभिप्राय अर्कै हो। मेरो विचारमा तिमी जंगली हाँस जस्तो घायल त होइनौ, तर तिमी विषालु दलदलमा फँसेको छौ। हजलमार, तिमीले मानसिक रोग अप्नायौ औ तिमीले मनको अन्धकारमा डुबुल्की लगायौ। तिमी आँखा चिम्म गरेर त्यही अन्धकारमा प्राण दिन चाहन्छौ।

हजलमार : म आँखा बन्द गरेर अन्धकारमा प्राण दिन चाहन्छु। ग्रेगर्स, तिमी कस्तो बकबास गर्दैछौ।

ग्रेगर्स : सुन तिमी स्थिर मनले सुन। म तिमीलाई उपाय बताउँछु जसमा तिमी फेरि माथि जीवनको तल तहबाट उठन सकोस्। सुन, मेरो जीवनको पनि एक उद्देश्य छ। हिजमात्रै त्यस उद्देश्यलाई चिने।

हजलमार : हुनु सक्छ, तर दया गरी मलाई यस्तै रहनदेऊ। तिमी यो विश्वास राख यो जरूर हो कि कहिले काँही म एक प्रकारको खिन्नतामा डुब्छु। यो अर्कै कुरो हो। नभए, म सर्वथा स्वस्थ छु। त्यो भन्दा वेसी अरू के आशा गर्न सकिन्छ।

ग्रेगर्स : तिम्रो खिन्नताको कारण त्यही विपको प्रभावले हो।

हजलमार : अच्छा ग्रेगर्स, अव दया गर, तिमारी र विखको वकवास छोड़। मलाई यस्तो कुरो सुनने आदत छैन। यहाँ घरमा कसैले पनि यस्तो खिन्नतासित कुरा गर्दैन।

ग्रेगर्स : हो त्यो त राम्ररी वुझछु।

हजलमरा : यस प्रकारको बातचीत मलाई जँच्दैन। औतिम्रो कल्पनाको विषालु दलदल पनि यहाँ छैन। म मान्दछु फोटोग्राफरको हैसियत साधारण हुन्छ औ हाम्रो साधन पनि सीमित छा तर याद राख कि म आविष्कारक हूँ आफ्नो परिवारको पालन-पोपण गर्न सक्छु। मेरो आर्थिक स्थिति साधारण छ। तर म साधारण छुइन। अच्छा, हेर, भोजन आइपुग्यो।

*गीना र हेदविग टेबलमा वियरको बोतल, ब्राण्डीको शीशी और गिलास राख्न थाल्छन। त्यसै समय सिंढीको दरवाजावाट रेलिङ र मोलविक पनि आउँछन्। कसैले पनि ओवरकोट वा टोपी लाएको छैन। मोलविकले कालो सूट लाएकोछ।*

गीना : **(टेबलमा चीजवीजहरू सजाउँदै)** तपरिहरू ठीक समयमा आउनुभो। रेलिङ—मोलविकलाई हेरिङको सलादको सुगन्ध आएको थियो, त्यसैले उसलाई कति वेरसम्म रोक्न सकिन्छ। भन हजलमार के हाल छ?

हजलमार : ग्रेगर्स मि. मौलविकसित तिम्रो परिचय गराऊँ। औ डाक्टर...हाँ रेलिङलाई त तिमी चिन्छौ।

रेलिङ : हो केही परिचय त छ। तिमी वर्ल साहबको पुत्र होइनौ। हो, तिमीसित होयदलमा एक दुइ चोटि भेट भएको होइन। तिमी यहाँ आजनै आएको।

ग्रेगर्स : बस् आज विहाननै आएको।

रेलिङ : मौलविक र म तल्लो तलामा, तिम्रो कमराको मुनिनै वस्छौं। डाक्टर र पादीको खाँचौ भए खोज्न जानु पर्दैन।

ग्रेगर्स : धन्यवाद! धेरै सम्भव छ, जरूरत पर्ने। अपशकुन त हिजनै भयो। हिज बेलुकी भोजना टेवलमा हामी तेह्र जना थियौं।

रेलिङ : हजलमार, तिमी निःशंका बस। त्यो अपसकुन सित तिम्रो केही सम्बन्ध नहुनु सक्छ।

हजलमार : भगवानले नगरोस्। मेरो परिवारलाई मेरो आवश्यकता छ। अच्छा, अब बस यो खाने पिउने र खुशीको समय हो।

ग्रेगर्स : तिम्रो पिताजीको प्रतीक्षा गरौ, उ आउँदैन।

हजलमार : होइन, उ अलिक दिलो खान्छ। आफ्नै कमरामा मगाएर खान्छ। आरम्भ गरौं **(सबै पुरुषहरू टेबल वरीपरी बसेर खानु पिउनु थाल्छन्। गीना र हेदविग नजिकमा बसेर पस्किन्दै जान्छन्।)**

रेलिङ : **(गीनालाई हेर्दै)** बैनी, हिज फेरि मौलविकको मति विग्रेको थियो। निकैनै पिएको थियो।

गीना : के भन्यौ, हिज फेरि।

रेलिङ : किन, हिज राति मैले उसलाई यो कमरामा ल्याउँदा, तपाईले केही सुन्नु भएन।

गीना : सुनिन, मलाई थाहा भएन।

रेलिङ : तपाईले सुन्नु भएन राम्रो भो, हिज राति यसले निकै दुःख दियो।

गीना : मौलविक साहब, उसले के भन्दैछ।

मौलविक : वितेको कुरो वित्यो, त्यसलाई सम्झेर के लाभ। ती कुराहरूको मेरो चैतन्य जीवनसित केही सम्बन्ध छैन।

रेलिङ : **(गेगर्सलाई हेर्दै)** कहिले काहीं उसमा उन्मादको लहर चल्छ। तब मलाई पनि दंगाबाजीमा यसको साथ दिनुपर्छ। यो राक्षसी प्रवृत्ति भएको मानिस हो।

ग्रेगर्स : राक्षसी।

रेलिङ : हो, यसको राक्षसी प्रवृत्ति छ।

ग्रेगर्स : हो!

रेलिङ : जान्दछौ, राक्षसी प्रवृत्ति भएको मानिसको जीवनमा सँधैनै संयमसित काम गर्नु सम्भव हुँदैन। यस्ता मानिस जब तक भड्किन्छ, खैर, तिमी अहिलेसम्म कारखानाकौ मैलामानै जमेर बसेको छौ, उठन सकेनौ।

ग्रेगर्स : हो, अहिलेसम्म सहेर आएकोछु।

रेलिङ : औ तिम्रो त्यो कर्त्तव्य जसको तिमी उपदेश दिन्थ्यौ, पूरा भयो।

ग्रेगर्स : मेरो कर्त्तव्य **(रेलिङपहि ध्यानले हेर्दै)** होओ, बुँझे।

हजलमार : कुन कर्त्तव्यको कुरा गर्दैछौ, ग्रेगर्स।

ग्रेगर्स : त्यसै बोल्दैछ।

रेलिङ : होइन होइन म ठीक भन्दैछु। होयदालमा यो घर घर घुमेर

"आदर्श पूर्तिको कर्त्तव्य" को प्रचार गर्थ्यो।

ग्रेगर्स : अरे त्यो अन्नरे समयको कुरो हो।

रेलिङ : त्यस समय तिमी केटानै थियौ। म पनि होयदालमा थिएँ। मैले कसैले पनि तिम्रो आदर्श पूर्तिको उपदेश सुनेको देखिन।

ग्रेगर्स : अहिले पनि कसैले सुन्दैन।

रेलिङ : ठीक छ, अब तिमीले व्यवहारिक वुद्धिले आफ्नो आदर्श केही मात्रामा समयानुकूल वनाएको हुनुपर्छ।

ग्रेगर्स : एकदमै होइन, मानिससित म मानव आदर्श को पूर्तिको कर्त्तव्यलाई पुरा गर्ने आशा गर्छु।

हजलमार : त्यो त उचित हो। गीना, अलिकति मखनदेऊ।

रेलिङ : मौलविकलाई अलिकति मासु चाहिन्छ।

मौलविक : अहँ, मलाई चाहिन्दैन।

*बुँइगल पट्टि दरवाजामा खटखट आवाज सुनिन्छ।*

हजलमार : हेदविग, दरवाजा खोल, पिताजीलाई आउनदेऊ।

*हेदविग दरवाजाको पल्ला खोल्छ। बूढो स्टुडियोमा आउँछ। उनको साथ खरायोको ताजा छाला पनि छ। बूढो भित्र आएर आफू पछिको दरवाजा बन्द गर्छ।*

एकदल : नमस्ते, नमस्ते, सबैलाई नमस्ते। आज राम्रो शिकार हात लागेकोछ, काफी ठूलो मारें।

हजलमार : आफू एक्लैले छाला पनि काढनु भयो। मलाई बोलाउनु भएन।

एकदल : हो, नुन पनि लगाएँ, बहुत राम्रो नरम मासु छ, एकदमै मिलो, चिनी जस्तो। निफै ठूलो खरायो थियो। तपाईहरूलाई भोज हुन्छ।

*बूढो आफ्नो कमरामा जान्छ।*

मौलविक : **(चौकी छोड़ेर उभिन्छ)** क्षमा गर्नुहोस्, मेरो मन ठीक छैन, म तल झर्दैछु…।

रेलिङ : अरे, अलिकता सोड़ा पानी ले ले। एकदमै वुद्धु छ।

मौलविक : **(खिन्नतापूर्वक)** उ हुँ **(सिँढीको दरवाजाबाट वाहिर निस्कन्छ)**

रेलिङ : **(शरावको गिलास उठाएर)** हजलमार पहि हेरेर, यो जाम पिताजीको! वृद्ध शिकारी को सफलता औ स्वास्थ्यको लागी।

हजलमार : **(आफ्नो गिलास रेलिङको गिलाससित छुवाएर)** हो, कब्रको नजिक उभिएको वृद्ध शिकारीको…।

रेलिङ : फुस्रो केशको सम्मानमा **(गिलासबाट एक घुटको पिएर)** उसको केश फुस्रो छ कि सेतो, बताऊ।

हजलमार : मेरो विचारमा न फुस्रो छ न पहेलो। दुवै मिलेको सम्झ। तर

असलमा उसको टाउकोमा केश नै कहाँ छ र।

रेलिङ : अरे केश झरे त के भयो। टाउको विगले ढाक्नु सकिन्छ।

हजलमार : हो, यसमा के सन्देह छ। निश्चयनै म आफ्नो लक्ष्य पुरा गर्न कोशिश गर्दैछु।

रेलिङ : औ सौभाग्यले तिमीले पत्नी पनि लक्ष्मी पाएकाछौ। चुपचाप निरन्तर काममा लागिरहन्छे। घरमा तिम्रो लागी सब सुविधा औ आराम बनाइदिएकीछे।

हजलमार : **(पत्नीपट्टि समर्थनले टाउको हल्लाउँदै)** यसमा केही सन्देह छैन। गीना वास्तवमानै एमदमै राम्रो जीवन-संगिनी छ।

गीना : ज्यू हो, मलाई किन जिस्काउँदै छौ।

रेलिङ : औ तिम्री छोरी हेदविग के कमी छ।

हजलमार : **(भावुकतासित)**—यसमा केही सन्देह छैन। हाम्री छोरी हाम्रो सबै कुरा हुन्। यहाँ आइज नानी **(छोरीको शिरमा प्यारो गर्दै हाथ राखेर)** भोलि के छ।

हेदविग : **(पिताको कुम हल्लाउँदै)** होइन, पापा, नबताऊ।

हजलमार : साँचैनै मेरो हृदय टुक्रा टुक्रा हुन्छ। म गर्ननै के सक्छु। बस बुँइगल मा सानो पार्टी गर्छु।

हेदविग : पापा, अरू के चाहिन्छ, ठीक छ त।

रेलिङ : हेदविग, केही चिन्ता नगर। आफ्नो पापाको आविष्कार पुरा हुनदेऊ।

हजलमार : हो छोरी। तब हेर। तिम्रो भविष्यलाई म त्यसै रहन दिन्न। तिम्रो जीवनभरको लागी सुख-सुविधाको व्यवस्था गरिदिन्छु। मेरो जति माग छ तिम्रै लागीनै हुन्छ। मेरो आविष्कारको यही पुरस्कार हुन्छ।

हेदविग : **(पिताको गलामा हाथ राखेर)** मेरो प्यारो पापा।

रेलिङ : **(ग्रेगर्सलाई सम्बोधन गर्दै)** तिम्रो के विचार छ, कहिले काहीं कुनै सुखी परिवारमा बसेर तृप्तिसित खाँदा पिउँदा कति सन्तोष हुन्छ।

ग्रेगर्स : जहाँसम्म मेरो प्रश्न छ, म कुनै विषालु वातावरण वा दम रोक्ने परिवेशमा फँसेको छुइन।

रेलिङ : विषालु वातावरण।

हजलमार : ओहो, भाइ त्यस्तो बकवास नगर।

गीना : हे राम, ग्रेगर्स भाइ, यहाँ विषालु वातावरण कहाँ छ। भगवान जानोस्। म प्रतिदिन पुरा घरको खिरकी दरवाजा खोलेर हावा ताजा गरिदिन्छु।

ग्रेगर्स : **(टेवलबाट पर सरेर)** म जुन दुर्गन्धको कुरा गर्दैछु, त्यो ताजा हावाले हट्न सक्तैन।

हजलमार : मैला।

गीना : **(पितापट्टि हेरेर)** यसले के भन्दैछ।

रेलिङ : माफ गर्नुहोस्, मलाई त सन्देह लाग्छ कि तिम्री स्वयंले नै होयदाल खानीवाट मैला ल्याएको होइन।

ग्रेगर्स : तिमी त त्यसै भन्छौ, म जहाँ जान्छु, मैला लिएरै जान्छु।

रेलिङ : **(ग्रेगर्सपट्टि अघि सरेर)** ग्रेगर्स, सुन, मेरो कुरा सुन। मलाई त अहिले पनि पुरा सन्देह छ कि तिमी अझै पनि त्यही पुरानो 'आदर्श मूर्तिको कर्त्तव्य' को प्रचारमा उन्झि रहेको छौ।

ग्रेगर्स : हो, निश्चयनै म यसको प्रचार गर्दैछु।

रेलिङ : तिम्रो इच्छा, जहाँ पनि प्रचार गर्न सक्छौ। तर याद राख कि जबसम्म म यो घरमा छु तवसम्म आफ्नो प्रचार तिमीले वन्द गर।

ग्रेगर्स : किन, म आफ्नो प्रचार गर्छु, तिमीले के गर्छौ।

रेलिङ : तिमीलाई खुट्टावाटै उठाएर शिरको वलले सिँढीमा घचेटी दिन्छु।

हजलमार : **(सहसा चिन्ताले उभिएर)** रेलिङ, के गर्दैछौ।

ग्रेगर्स : **(रेलिङलाई सम्वोधन गर्दै)** अच्छा, मलाई उठाएर फ्याँकिदेऊ।

गीना : **(वीच वचाउको लागी अघि चढ़ेर)**–रेलिङभाइ, तिमी के यस्तो उटपटाङ गर्दैछौ। तर ग्रेगर्स साहव, तपाईले पनि के गर्नु भएको। आफ्नो कमरा त मैलाले भर्‍यौ अनि यहाँ मैला फ्याँकने कुरा गर्दैछौ।

*सिँढ़ीको दरवाजामा आवाज सुनिन्छ।*

हेदविग : आमा, कसैले दरवाजा खटखटाँउदैछ।

हजलमार : लौ हेर, फेरि दुःख दिनलाई कोही आउँदैछ।

गीना : पर्ख, म हेरूँ। **(दरवाजा खोलेर तर्सन्छे र पछि हट्छे)** हे राम **(दरवाजामा ग्रेगर्सका पिता मि॰ वर्ल आउँछ। मि॰ वर्लले–रूवा भएको दामी ओवरकोट लगाएकोछ)**

मि॰ वर्ल : क्षमा गर्नुहोस्! तर मेरो छोरो ग्रेगर्स यही घरमा छ।

गीना : **(गहिरो सास लिएर)** ज्यू हो।

हजलमार : **(आगन्तुकको अघि वढ़ेर)** आउनुहोस् वर्ल साहव, आउनुहोस्, कृपा गर्नुहोस्, वस्नुहोस्।

मि॰ वर्ल : धन्यवाद, धन्यवाद। म आफ्नो छोरोसित खाली एउटा कुरा गर्न चाहन्छु।

ग्रेगर्स : **(अघि वढ़ेर)** आज्ञा गर्नुहोस, म उपस्थित छु।

मि. वर्ल : तिमी आफ्नो कमरामा हिंड उहीं कुरा गरौं।

गीना : क्षमा गर्नुहोस्। त्यहाँ होइन। के भनुँ कमरा तपाई जाने लायकको छैन, अहिले।

मि. वर्ल : अच्छा सिँढीमै होस्। म एक्लो कुरा गर्न चाहन्छु।

हजलमार : तपाईहरू यहीँ कुरा गर्नुहोस्। रेलिङ तिमी दफ्तरमा आऊ।

*हजलमार र रेलिङ दाहिने पट्टिको दरवाजामा जान्छन्।*
*गीना र हेदविग भान्सा घरमा जान्छन्।*

ग्रेगर्स : (केही प्रतीक्षा गरेर) भन्नुहोस्, उनीहरू गए।

मि. वर्ल : हिज राती तिमीले एउटा कुरा भनेका थियौ। तिमी आफ्नो घर छोड़ेर थिनीहरूसित बस्न आयौ। यस्तो स्थितिमा मलाई सन्देह हुन्छ कि तिमी मसित असन्तुष्ट छौ औ तिमी मेरो विरुद्ध केही गर्न लागिरहेछौ।

ग्रेगर्स : मेरो विचार यही हो कि म हजलमार एकदललाई वास्तविक स्थिति वताइ दिऊँ, उसको आँखा खुलोस्। यस वाहेक अरू केही छैन।

मि. वर्ल : हिज राती तिमी जीवनको उद्देश्य र कर्त्तव्यको कुरा गर्दैश्यौ। त्यो उद्देश्य र कर्त्तव्य यही हो।

ग्रेगर्स : ज्यू तपाईले मलाई यस्तो गर्नु विवश गराउनुभो।

मि. वर्ल : ग्रेगर्स, के मेरो कारणलेनै तिम्रो मस्तिष्क यति क्षुब्ध भयो।

ग्रेगर्स : ज्यू हो, तपाईको कारणले मेरो पूरा जीवन क्षुब्ध भएकोछ। हिज आमा सम्वन्धी जुन कुरो भएको थियो, अहिले त्यसको चर्चा गरेको छुइन। तर तपाईको कारणले मेरो मन र आत्मा अपराधी अनुभव गर्दैछ। म असह्य ग्लानि र यन्त्रणा अनुभव गर्दैछु।

मि. वर्ल : ओ हो, तिमी आत्मिक र मानसिक चिन्ताको चक्करमा पर्‍यौ।

ग्रेगर्स : मैले तपाईको विरोध पहिलेनै गर्नुपर्थ्यो। जुनसमय तपाई लेफ्टीनेन्ट एकदललाई फसाउँन षड़यन्त्र रच्दै हुनुहुन्थ्यो, त्यसै समय मलाई विरोध गर्ने साहस हुनुपर्थ्यो। मलाई त्यसै समय सन्देह थियो कि षाड़यन्त्रको परिणाम के हुन्छ। त्यसै समय उसलाई सावधानी गराउन पर्थ्यो।

मि. वर्ल : ठीक हो, तिमीले त्यसै समय भनिदिनु पर्नेथ्यो।

ग्रेगर्स : हो, मैले जरूर भन्नु पर्ने थियो। तर मेरोमा साहस भएन। म त्यस समय एकदमै डरपोक थिएँ। म बताउन सक्तिन कि त्यस समय म तपाईको जबर्जस्त आतंकमा थिएँ। त्यो आतंक कति वर्षसम्म रह्यो।

मि. वर्ल : अब त तिमीमाथि मेरो आतंक छ जस्तोलाग्दैन।

ग्रेगर्स : ज्यू, सौभाग्यले अब त्यो आतंक छैन। मैले, अरूले, विचारा एकदललाई जो अन्याय गर्‍यौं, त्यसको केही प्रतिकार हुन सक्दैन। तर हजलमार जुन प्रपंच र पाखण्डमा फँसेर पीड़ा सहन गर्नु परेकोछ, त्यसलाई म हटाउन सक्छु।

मि. वर्ल : तिमी सम्झन्छौ, यसरी तिमीले कसैको भलाई गर्न सक्छौ।

ग्रेगर्स : ज्यू, मलाई पुरा विश्वास छ।

मि. वर्ल : के तिमी वास्तवमा यही सम्झन्छौ कि हजलमार जस्तो मानिस यस कामको लागी तिमीप्रति आभार अनुभव गर्छ।

ग्रेगर्स : मलाई पूर्ण विश्वास छ।

मि. वर्ल : अच्छा, हेर्छु।

ग्रेगर्स : यस वाहेक आफ्नो मन र आत्मालाई यस ग्लानि र दुःखको वेदनाबाट मुक्त नगराइ जीवित रहनु सम्भव छैन।

मि. वर्ल : त्यो चक्करबाट तिमी छुटन सक्तैनौ। मानसिक खिन्नताको संस्कार तिमीमा बालककालदेखिनै छ। यो तिम्रो आमाको प्रभाव हो। ग्रेगर्स, वस् तिम्रो लागी उसको यही एउटा देन हो।

ग्रेगर्स : (व्यंगपूर्ण मुस्कुराहटसित) तपाईको मनमा अझ पनि यो क्षोभ छ कि तपाईले भूलले आशा गर्नुभएको थियो कि मेरी आमा तपाईकहाँ आए धेरै सम्पत्ति लिएर आउँछे।

मि. वर्ल : यो समय बितेको बात गर्न कुनै लाभ छैन। म यो जान्न चाहन्छु कि तिमीले आफ्नो विचार पूरा गर्ने निश्चय गरेको छौ। आफ्नो विचार अनुसार हजलमारको भ्रम नहटाइ वस्न सक्तैनौ।

ग्रेगर्स : हो, यो निश्चय हो।

मि. वर्ल : तब, मैले यहाँ आउने दुःख व्यर्थैमा गरें। म सम्झन्छु, तिमीलाई घर फर्कने अनुरोध गर्नु व्यर्थै हुन्छ।

ग्रेगर्स : हो, केही लाभ छैन।

मि. वर्ल : तिमी आफ्नो कम्पनीमा पनि साझेदारी हुँदैनौ।

ग्रेगर्स : ज्यू छुइन, हुँदिन।

मि. वर्ल : जस्तो तिम्रो इच्छा। तर मेरो विचार अर्को विहे गर्नेछ। यसैले मैले सम्पत्ति वाड्नुपर्छ।

ग्रेगर्स : (खिन्नतासित) ज्यू, यो हुन सक्दैन।

मि. वर्ल : यो हुन सक्दैन।

ग्रेगर्स : ज्यू, यो हुन सक्दैन। मेरो आत्माले यो स्वीकार गर्न सक्तैन।

मि. वर्ल : (एकछिन सोचेर) तिमी फर्केर कारखानामा जान्छौ।

ग्रेगर्स : ज्यू होइन, मैले तपाईंको काम र नौकरी छोड़ी दिएँ।
मि. वर्ल : आखिर केही त गर्छौ।
ग्रेगर्स : म केवल मेरो जीवनको उद्देश्यको पूर्तिको लागी चेष्टा गर्छु, अरू केही गर्दिन।
मि. वर्ल : त्यो त गर्छौ, तर त्यसपछि, निर्वाह कसरी चल्छ।
ग्रेगर्स : निर्वाहको लागी मेरोमा छ। म आफ्नो तलबबाट बचाउँदैछु।
मि. वर्ल : त्यसले कति दिन चल्छ।
ग्रेगर्स : म सम्झन्छु, मेरो जीवनको लागी पर्याप्त हुन्छ।
मि. वर्ल : के मतलब हो तिम्रो।
ग्रेगर्स : म यी प्रश्नहरूको उत्तर दिन चाहँदिन।
मि. वर्ल : अच्छा ग्रेगर्स, खुशी बस, विदा।
ग्रेगर्स : विदा, प्रणाम।

*मि. वर्ल बाहिर निस्कन्छ।*

हजलमार : **(दरवाजाबाट हेर्दै)** के, गए।
ग्रेगर्स : हो, गए।

*हजलमार र रेलिङ स्टुडियोमा आउँछन्। गीना र हेदविग पनि आउँछन्।*

रेलिङ : खाना कस्तो खह्रो भो।
ग्रेगर्स : हजलमार, तिमी आफ्नो कोट र टोपी बोक, हामी अलिक टाड़ो घुम्न जाऊँ।
हजलमार : अवश्य जान्छु। पिताजी किन आउनुभएथ्यो। मेरो विषयमा त केही भनेन।
ग्रेगर्स : आऊ, मसित बाहिर हिड़ँ, तिमीसित जरूरी कुरा गर्नुछ। म आफ्नो कोट बोक्छु **(दरवाजावाट निस्कन्छ)**
गीना : **(हजलमारलाई सम्वोधन गर्दै)** तिमी उसित नजाऊ।
रेलिङ : हो, तिमी नजाऊ, यहीं बस।
हजलमार : **(कोट र टोपी लिएर)** किन, के कुरा छ! उ त मेरो पुरानो मित्र हो। एकान्तमा आफ्नो मनको कुरा गरेर मन हल्का गर्न चाहन्छ।
रेलिङ : नर्कमा जावोस यस्तो मित्रता। तिमी देख्दैनौ, उ पगला हो, उसको दिमाग ठीक छैन।
गीना : हो, कुरा यही हो। उसको आमालाई पनि यस्तै हुन्थ्यो।
हजलमार : त्यसो भए म उसित जानै पर्छ। उसको साथ कोही आफ्नो मान्छे रहनु आवश्यक छ। **(गीनालाई सम्वोधन गर्दै)** : सुन, साँझको

भोजन अलिक छिटो तयार गर। अच्छा, जाँदैछु (**सिँढ़ीको दरवाजाबाट बाहिर निस्कन्छ**)

रेलिङ : यस्तो मानिसमाथि भगवानको नजर पनि पर्दैन। यो त होयदालको कुनै खानीमा बसेको भए कल्याण हुन्थ्यो।

गीना : हे राम, तपाई किन यसो भन्नु हुँदैछ।

रेलिङ : (**दाँत किटेर**)—म उसलाई जान्दछु।

गीना : के साँचैनै पगला छ।

रेलिङ : होइन, यो कुरो होइन, उसको होस हवास अरू मानिसको भन्दा राम्रो छ तर उसको चिन्तनमा जरूर रोग छ।

गीना : के कुरा हो, उसलाई के भएकोछ।

रेलिङ : के बताऊँ, बैनी, यसलाई आदर्शवादको विकट जरो छ।

गीना : आदर्शवादको जरो!

हेदविग : काका, यो पनि कुनै विमारी हुन्छ।

रेलिङ : हो, हुन्छ यो बिमारी। हाम्रो यहाँ दबिएर बसेकोहुन्छ कहिले काहीँ भड़किएर उठछ। (**गीनापट्टि शिर झुकाएर**) यति राम्रो भोजनको लागी धन्यवाद। (**सिँढ़ीको दरवाजाबाट बाहिर निस्कन्छ**)

गीना : (**चिन्ताको भावले स्टुडियोमा घुम्दै**) उफ्, यो गेगर्स, सँधैनै पागल।

हेदविग : (**टेबलको छेउमा उभिएर आमापट्टि चिन्ताले हेर्दै**) हाय! के के भन्दैछ, के भयो सबलाई।

❑❑❑

# चौथो दृश्य

[ हजलमार एकदलको स्टुडियो। फोटो खिंचे पछिको स्थिति। कालो लुगाले ढाकेको कैमरा एउटा अग्लो ताकमा राखिएको। कैमराको सामुन्ने स्टुडियोको बीच बीचमा राखेको दुइवटा चौकी र सानो टेबल। सन्ध्या हुन लागेकोछ। सूर्यास्तको समय छ, अँधेरो बढ़दै छ। गीना खुला दरवाजाको छेउमा उभिएकीछ। उसको एक हातमा सानो डिब्बा छ औ अर्कोपट्टि धोएको भिजेको प्लेट छ। उ दरवाजाको वाहिर उभिएको मानिसको उत्तर दिँदैछे। ]

गीना : हो, निश्चय, अवश्य तयार हुन्छ। मैले जुन समय भनेकोछु, त्यही समय काम तयार हुन्छ। तपाईको एक दर्जन चित्र सोमवार अवश्य पाउनुहुन्छ। अच्छा, नमस्ते।

*सिँढ़ीमा झर्दै गरेको आवाज आउँछ। गीना दरवाजा बन्द गर्छे। उसले प्लेट डिब्बामा राख्छे। औ डिब्बालाई कैमेरासित मिलाएर राख्छे। हेदविग भान्साघरबाट स्टुडियोमा आउँछे।*

हेदविग : उनीहरू गए।

गीना : (कमरा सफा गर्दै)—राम्रो भो, बल्ल छुटकारा पाएँ।

हेदविग : आमा, पापा अहिलेसम्म फर्केन, के भयो, अहिलेसम्म आएन।

गीना : तिमीले तल रेलिङ काकाकोमा हेर्‍यौ? उहाँ पनि छैन।

हेदविग : त्यहाँ छैन, मैले भर्खरै सिँढ़ीको पछिल्तिर वाट हेरेर आएको।

गीना : उसको लागि खाना कहिलेदेखि राखेको। राख्दा राख्दा चिसो भइसक्यो।

हेदविग : के भयो, पापा यति ढिलो त गर्दैन। भोजनको लागी त उ सँधै ठीक समयमा आउँछ।

गीना : अच्छा, आउँदै होला।

हेदविग : अहिलेसम्म किन आएन। आमा, मलाई आज कस्तो-कस्तो लाग्दैछ, किन हो कुन्नी।

गीना : आयो, उ हेर पापा आयो (**हजलमार सिँढ़ीको दरवाजाबाट भित्र आउँछ**)

हेदविग : **(पिताको छेउमा गएर)** पापा, तपाई किन यति दिलो गर्नुभयो। म कहिलेदेखि तिम्रो बाटो हेर्दैछु।

गीना : **(पतिलाई हेर्दै)**—आज धेरै बेर बाहिर गयौ, कहाँ थियो।

हजलमार : **(पत्नीको नजरबाट छलेर)** हो, केही अबेर भयो।

*उ आफ्नो ओवरकोट उतार्न लाग्छ। गीना र हेदविग सहायताको लागि अघि बढ्छन्। हजलमार उनीहरूलाई परै बस्ने संकेत गर्दै ओवरकोट आफै उतार्छन्।*

गीना : ग्रेगर्ससित बाहिर खाएर आएनौ।

हजलमार : होइन **(आफ्नो कोट काँटीमा टाँगछ)**

गीना : **(भान्सा घरमा जाँदै)**—अच्छा, त म लिएर आउँछु।

हजलमार : होइन होस्, खाने इच्छा छैन।

हेदविग : **(पिताको छेउमा गएर)** पापा, के भयो, सन्चो छैनौ।

हजलमार : होइन. म एकदमै ठीक छु। ग्रेगर्ससित निकै टाड़ो गएँ, थाकेछु।

गीना : यति टाड़ो किन गयौ, जान्दछौ, तिमीलाई यत्रो हिड़ने आदत छैन।

हजलमार : हो, आदतले के हुन्छ। यो संसारमा मान्छेले धेरै कुरो गर्नुपर्छ। **(कमरामा ओहोर दोहोर गर्न लाग्छ)** कोही मसित भेटन आएन।

गीना : आएन। बस उही विहे गर्ने जोड़ी फोटो खिच्न आएको थियो।

हजलमार : अरू कुनै ग्राहक आएन।

गीना : आज त कोही आएन।

हेदविग : पापा हेर्नुहोस, भोलि कोही अवश्य आउँछ।

हजलमार : हो, आशा गरौ। भोलि मेरो धेरै काम छ। जति सक्छ, गर्नुछ।

हेदविग : पापा, तपाईले भुल्नु भो, भोलि के छ।

हजलमार : हो, ठीक हो, अच्छा पर्सी त्यसो भए। अब सबै काम म आफै गर्छु। आफ्नो काममा मलाई कसैको सहायताको आवश्यकता छैन।

गीना : त्यसबाट के लाभ। अर्थ र वर्थमा आफ्नो दुःख बढ़ाउने के जरूरत छ। फोटोको काम म आफै गर्छु। तिमी आफ्नो समय आविष्कारको खोजमा लगाऊ।

हेदविग : हो पापा, तपाईले जंगली हाँस कुखुरा र खरायो पनि त हेर्नुपर्छ।

हजलमार : उटपटाङ नबोल, भोलिदेखि म बुँइगलमा खुट्टा पनि टेक्दिन।

हेदविग : तर पापा, भोलि बुँइगलमा पार्टी गर्छु भनेको थियौ।

हजलमार : हो हो, मलाई याद छ। अच्छा, पर्सीदेखिनै होस्। जंगली हाँस

जहाँ सुकै जावस्। मलाई त्यसको गर्दन मठारिदिऊ जस्तो लाग्छ।

हेदविग : **(चिच्याएर)** हाय, होइन पापा होइन।

गीना : त्यसै यत्रो चिन्तित छौ।

हेदविग : **(पिताको हात समातेर)**–जंगली हाँस मेरो हो।

हजलमार : हो मैले त्यसलाई केही गरेको छुइन। मेरो मन यस्तो पत्थरको छैन। हेदविग, तिम्रो म माया गर्छु तर मेरो मनले भन्छ त्यसलाई समाप्त नै गरूँ। त्यो मान्छेले छोएको कुनै पनि वस्तु आफ्नो घरमा नराखौं भन्छु।

गीना : हे राम, तिमी पनि कस्तो कुरा गर्दैछौ। चरा त पिताजीले त्यो मैले पेटर्सनबाट ल्याएको हो।

हजलमार : **(कमरामा छटपटी गर्दै)**–तर मानिसको केही कर्त्तव्य···मेरो मतलब हो···आदर्शप्रति कर्त्तव्य···जो मानिसको अनिवार्य कर्त्तव्य हुन्छ। त्यस कर्त्तव्यको उपेक्षा गर्नु आफ्नो आत्माको हनन गर्नु हो।

हेदविग : **(पिताजीको छेउमा गएर)** तर पापा, जंगली हाँस, विचरा जंगली हाँस त···।

हजलमार : **(मौन उभिएर)** सुन, तिम्रो खातिर जंगली हाँसलाई केही गर्दिन। मैले भने, म उसलाई हात लाँउदिन। तर अरू कुरा छ, जंगली हाँस भन्दा अधिक महत्त्वपूर्ण। हेदविग, तिमी बाहिर जाऊ, घुमेर आऊ, बाहिर अँधेरो भएको छ।

हेदविग : आज जाँदिन, मेरो इच्छा छैन।

हजलमार : होइन, तिम्रो लागी ठण्डामा घुम्नु आवश्यक छ। तिम्रो आँखामा पानी आएकोछ। बन्द कमरामा तिम्रो आँखालाई कष्ट हुन्छ। यो धुवाँ, मैला हावा, यो घरको वातावरण तिम्रो लागी ठीक छैन।

हेदविग : हुन्छ, पछिल्लो सिँढीबाट जान्छु। केही पर गएर फर्कन्छु। मेरो कोट औ टोपी, मेरो कमरामा छ। पापा, म गएपछि जंगली हाँसलाई केही गर्नु हुन्न।

हजलमार : गर्दिन छोरी। जंगली हाँसलाई म हात पनि लाउँदिन, विश्वास गर **(हेदविगलाई स्नेहपूर्व छेउमा तान्छ)** हेदविग, हामी दुइ, म र तिमी अच्छा जाऊ, दौड़ेर घुमेर आऊ। **(हेदविग बाहिर जान आमा र बाबुसित गर्दन हल्लाउँदै नमस्ते गर्छे र भन्सा घरको बाटो जान्छे। हजलमार गर्दन झुकाएर कमरामा ओहोर दोहोर गर्न लाग्छन्)**

गीना : हँ, के हो।

हजलमार : भोलिदेखि, होइन मेरो अभिप्रायः पर्सीदेखि घरको हिसाब किताब

म आफै राखौ।

गीना : घरको हिसाब किताब पनि तिमी राख्ने।

हजलमार : कमसे कम मलाई त थाहा हुन्छ हाम्रो आय कति छ।

गीना : भला होस्, त्यसमा जान्ने के कुरा छ।

हजलमार : म केही जान्दिन। मेरो आयमा तिमी यत्रो खर्च कसरी चलाउँदैछौ। (**कदम रोकेर पत्नि पट्टि हेर्छ**) म सम्झन सक्तिन तिमो यत्रो खर्च कहाँबाट चलाउँदैछौ।

गीना : त्यसमा के छ, मेरो र हेदविगको के खर्च छ?

हजलमार : सुन्दैछौ, वर्ल साहबले पिताजीलाई त्यसै पैसा दिन्छ रे।

गीना : उनको काम र हिसाबको बारेमा मलाई के थाहा। मलाई के थाहा अरूको दफ्तरमा कति पैसा पाउँछ।

हजलमार : महीनामा कति पाउँछ त्यसको अनुमान त होला।

गीना : सबै महीनामा बराबर पाउँदैन। कहिले कम कहिले बेसी। अनुमान यही छ कि हामी उसको लागी जो खर्च गर्छौ, त्यो पाउँछौ। केही पैसा उसको पाकेट खर्चको लागी बाँच्छ होला।

हजलमार : हामी उसको लागी जो खर्च गर्छौ, यो सब कुरो मलाई तिमीले कहिले बताएनौ?

गीना : के बताउनु। तिमीले कहिले कुरा गरेनौ। उनीहरूको आवश्यकता पुरा हुँदैछ, यसैमा तिमी सन्तुष्ट छौ।

हजलमार : हो, वास्तवमा खर्च बूढो वर्लले दिन्दैछ।

गीना : उसमा के हुन्छ, उसकोमा के कमी छ।

हजलमार : (**लेम्पपट्टि संकेत गर्दै**) अच्छा, अलिक उज्यालो बनाऊ।

गीना : (**लेम्प उज्यालो पारेर**) मलाई के थाहा, वास्तवमा के कुरा छ। वर्ल साहबले दिँदै हुनुहुन्छ वा ग्रावर्गको सौजन्यले)

हजलमार : तिमी कुरा किन ग्रावर्गपट्टि लाँदैछौ?

गीना : मलाई के थाहा, मैले त हुन सक्छ मात्रै भने।

हजलमार : हूँ!

गीना : पिताजीलाई दफतरमा काम दिलाउन म त गएको थिइन। तिमीलाई याद छ श्रीमती सूरबी महोदया यहाँ आएकी थिई। त्यसपछि उसले पिताजीलाई काम दिलाएको थियो।

हजलमार : तिमी कस्तो बोल्दैछौ, तिम्रो गलामा के भयो?

गीना : (लेम्पमाथि सेड लगाएर) केही पनि होइन, ठीक त बोल्दैछु।

हजलमार : तिमो हात पनि काम्दैछ के भो?

गीना : (**दृढ़तासित**) साँचो भन, त्यस मानिसले मेरो विषयमा के बकवास

गर्‍यो?

हजलमार : तिमी साँचो भन, जब तिमी वर्ल साहबकोमा नोकरी गर्‍यौ त्यस समय तिमीहरूमा केही सम्बन्ध थिएन?

गीना : बिलकुल झूटो, त्यस समय केही कुरा थिएन। कुरा यो हो कि वर्ल साहब त्यस समय पनि मेरो पछि लाग्थे। ग्रेगर्सकी आमाले मलाई सन्देह गर्थी औ सँधै झगड़ा गर्थी। त्यस स्त्रीले मलाई जिउनुनै मुश्किल बनाएकी थिई। मलाई एक छिन पनि चैन थिएन। यसै चिन्ताले मैले नौकरी छोड़ी दिएँ।

हजलमार : त फेरि के भयो?

गीना : नोकरी छोड़ेर म आफ्नो घर फर्के। मेरी आमा तिमीलाई उसको के कुरा गरौं। ग्रेगर्स आमा मरिसकेकी थिइन्। आमा मसित नचाहिदो कुरा गर्थी।

हजलमार : हो, फेरि के भयो।

गीना : तिमीले सोध्दैछौ, त्यसैले म भन्छु। उसले मेरो पछि छोड़ने, जबसम्म उसको इच्छा पुरा भएन।

हजलमार : **(दुवै हात समातेर)** उफ्, यस्ती स्त्री हुन् मेरी छोरीकी आमा! तिमीले यी सब कुरा अहिलेसम्म किन बताएनौ।

गीना : मलाई क्षमा गर्नुहोस्। मलाई बताउने साहस भएन।

हजलमार : तिमीले यही कुरो त मलाई सबैभन्दा अघि बताउनु पर्नेथ्यो। मलाई थाहा हुनेथ्यो तिमी कस्ती स्त्री हौ।

गीना : यो बताएको भए तिमीले मलाई बिहे गर्ने थिएनौ।

हजलमार : यो आशा तिमी कसरी गर्न सक्छौ।

गीना : आशा गर्न सक्तिन थिएँ, किनभने मलाई बताउने साहसनै भएन। तिमीलाई थाहा छैन म तिमीलाई कति चाहन्थे। यो कुरा गरेर मैले कसरी यत्रो समस्या खड़ा गर्नु।

हजलमार : **(फेरि कमरामा ओहोर दोहोर गर्नलाग्छ)** अनि यो हो मेरी छोरीकी आमा। मलाई अब थाहा भयो कि जे चीज पनि यहाँ छ **(छेउको चौकीलाई लातले हिकाउँदै)** यो सबकुरा त्यही मानिसको कृपा हो जो तिमीसित पनि खेलाँची गर्दै थियो।

गीना : चौध पन्ध्र वर्षदेखि म तिम्रो साथ छु। यतिका वर्ष तिमीले के देख्यौ, त्यसको लागी तिमीलाई पश्चाताप छ।

हजलमार : **(पत्नीको सामुन्ने खड़ा भएर)** तिमी यो बताऊ। यत्रो वर्षदेखि तिमीले मलाई झूटोको जंजालमा फसाएँर राख्यौ। तिम्रो मन यसको लागी कहिले पश्ताएन। किन तिमीले पछुतो र संतापको

वेदना अनुभव गरेनौ।

गीना : मैले के सोच्नु, घर गृहस्थी संभाल्न र दोकान चलाउने नित्य चिन्ताले कहिले फुर्सद थियो। म कहिले खाली बसे र अरू कुरो सोच्नु।

हजलमार : त तिमीले आफूले गरेको कुरो कहिल्यै सोचेनौ।

गीना : के सोच्नु, भगवान जानोस्। मेरा मनमा ती कुराहरू कहिले आएन।

हजलमार : औ संज्ञाहीन, भावहीन, निश्चिन्त पशु। म यो सोचेरनै अधमरो भएँकि तिमी आफूलाई पल भरको लागी पनि पछुतो र ग्लानी भएन।

गीना : म तिमीलाईनै सोध्दैछु, तिमी बताऊ, तिमीले म जस्तो पत्नी नपाएको भए तिम्रो जिन्दगी के हुने थियो।

हजलमार : तिमी जस्तो पत्नी।

गीना : मैले भूल वोलेको छुइन। तिम्रो धन्धा म चलाउँदैछु। यो दोकान चलाउन तिमीले सक्तैनौ। मान्छु, म तिमीभन्दा वर्ष दुइ वर्षले जेठो छु, मेरो अनुभव पनि धेरै छ।

हजलमार : तिमी बिना मेरो जीवन चल्न सक्ने थिएन।

गीना : म एकदमै ठीक भन्दैछु। तिमीलाई याद छैन। जब हाम्रो परिचय भयो, तिम्रो के अवस्था थियो। तिमी कस्तो आदत र संगतमा बसेको थियौ।

हजलमार : तिमी नराम्रो आदत र संगतको कुरा गर्छौ। तिमी बुझन सक्तैनौ जव मानिसको मनमा लादिएको संताप र निराशाको भारबाट सास लिन नसके उसको के अवस्था हुन्छ''औ विशेष गरी मा जस्तो भावुक व्यक्तिको'''।

गीना : मलाई के थाहा। मलाई त्यस कल्पनाको लागी समय कहाँ थियो। मलाई त्यसको आवश्यकता पनि थिएन। मलाई विहे गरेर, आफ्नो घर बसाएर तिमी वास्तवमा सज्जन र सहृदय भएको थियौ। हामी शान्ति र सुविधाले बसी रहेका थियौ। हाम्रो अवस्था सुध्रिन्दै गयो। अब हेदविग र म पनि पेटभर खान र लाउन पाउनु थालेका थियौ।

हजलमार : यो प्रवंचनाको हिलो थियो।

गीना : भगवानले त्यो सम्झोस् त्यस घृणित व्यक्तिले यस कुरोमा टाउको नदुखाएको भए।

हजलमार : म पनि सोच्थे, मेरो आफ्नो परिवार छ। सुख सुविधापूर्ण आफ्नो

घर छ, तर त्यो सब भ्रान्तिमात्र रहेछ। अब मेरो संसारमा को छ। म कसको लागी हुँ, कहाँबाट मेरो आविष्कार पूर्ण गर्ने प्रेरणा पाऊँछु। अब सम्भवतः मेरो आविष्कार मसित समाप्त हुन्छ, अपूर्ण रहन्छ औ यो सबको दायित्व गीना। तिमी माथि हुन्छ, तिम्रो अतीतको पाप माथि हुन्छ।

गीना : **(उसको आँखा आँसुले भरिन्छ)** यो तिमीले के भनेको। मैले जाति गरें, सँधै तिम्रो भलाइको लागी गरें, तिम्रो सन्तोषको लागी गरें।

हजलमार : म तिमीलाई सौध्दैछु। तिमी भन, अव मेरो परिवारको रक्षाको मेरो सपना के हुन्छ। जव म सोफामा बसेर आफ्नो आविष्कारको विषयमा चिन्तन गर्थे, त्यस समय मेरो अघि यही चित्र रहन्थ्यो कि यस आविष्कारलाई पूर्ण गर्न मेरो सम्पूर्ण शक्ति तथा जीवन को महान दिन हुनेछ र यसदेखि छुटकारा पाउनेछु। म कल्पना गर्थे कि मेरो सफलताको शुभ दिन आउनेछ जब आफ्नो आविष्कारको एकाधिकारका पत्र मेरो हातमा हुन्छ, त्यसै समय यो संसारसित मेरो छुटकारा हुनेछ। म यस कल्पनाबाट सन्तोक मान्थे कि तिमी एक आविष्कारकी विधवा पत्नीको रूपमा आफ्नो शेष जीवन आदर र समृद्धिसाथ बिताउन सकोस्।

गीना : **(आँसु पुछदै)** के नचाहिँदो कुरा गर्दैछौ। भगवानले मेरो भाग्य यसरी नफुटाओस। तिमी बिना म एक दिन पनि बाँच्न चाहदिँन।

हजलमार : खैर, अब यो सब व्यर्थ छ। यो कुरोले के फायदा। बस, जो हुनुथ्यो, भइ गयो। सब समाप्त भयो।

*सिँढ़ीको दरवाजा विस्तारो खोलिन्छ औ ग्रेगर्स सावधानीसित भित्र हेर्छ।*

ग्रेगर्स : म भित्र आउन सक्छु?

हजलमार : हँ, आऊ।

ग्रेगर्स : **(कमरामा आउँछ। उसको चेहरा प्रसन्न र संन्तुष्ट छ। भित्र आएर आफ्नो हात हजलमार पहि बढाउँछ)** भन मित्र, के कुरा छ, भाउज्यूको के खबर **(पालैसित दुवैजनाको अनुहारमा ध्यानसित हेर्छ औ हजलमार पट्टि झुकेर विस्तार सोध्छ)** अहिले कुरा गईको छैनौ।

हजलमार : **(उच्च स्वरमा)** कुरो भइ सक्यो।

ग्रेगर्स : भइ गयो।

हजलमार : मेरो लागी यो कठिनतम क्षण हो।

ग्रेगर्स : तर म सम्झन्छु, यस्तै क्षणले मानिसलाई माथि उठाउँछ।

हजलमार : खैर, जे सुकै होस्। मैले झगड़ा समाप्त गरे। जो हुनु थियो, भइ गयो।

गीना : ग्रेगर्स भाइ, भगवानले तिमीलाई सम्झन्छ।

ग्रेगर्स : **(उदेक मानेर)**—के, मैले बुझिन।

हजलमार : के तिमीले बुझेनौ।

ग्रेगर्स : यस्तो महत्त्वपूर्ण शुभ क्षणमा—जब तिम्रो आँखाबाट भ्रम र अन्धकारको पर्दा हट्न लागेको छ, जब तिमी भ्रान्तिलाई समाप्त गर्दै नयाँ जीवन आरम्भ गर्दैछौ—जीवनको त्यो सहयोगको ज़सको आधार निश्चल र पापको क्लेषले नछोएको हृदय हो।···

हजलमार : हो ठीक हो, अहिले रहोस्।

ग्रेगर्स : मलाई त पूरा विश्वास थियो कि म यहाँ तिमीलाई बिल्कुल अर्के अवस्थामा पाउनेछु। तिमी दुवैको अनुहार नव-जीवनको प्रकाशले दिप्त देख्नेछु, तर यहाँ त म निराश, अवसाद औ दुःखको प्रभाव देख्दैछु।

गीना : **(लेम्पको माथिको सेड हटाएर प्रकाश बढाउँछ)** ओ के देख्छौ।

ग्रेगर्स : म जान्दछु भाउज्यू, मेरो कुरा बुझेको छैनौ, तर समय आउँछ जब बुझ्छौ। तर हजलमार, तिमी त बुझदैछौ हैन। तिमी त सचाईको पवित्रताको प्रकाशको प्रभाव हृदयमा अनुभव गरिरहेछौ।

हजलमार : हो हो किन होइन, गर्दैछु।

ग्रेगर्स : बिलकुल ठीक भन्दैछौ। अपराध औ पापलाई क्षमा गरेर, अपराधी र पापीको प्रेमबाट उद्धार गरेर, उसलाई हृदयले स्वीकार गरेर बड़ो सुख र सन्तोष संसारमा अरू केही हुनसक्छ।

हजलमार : तिमीले के सम्झेको छौ, मेरो मन कस्तो भएको छ। के अपमान र बेदना सहन गर्न यति सरल छ?

ग्रेगर्स : होइन होइन, म जान्दछु, साधारण मानिसको लागी यो सम्भव छैन। तर तिमी जस्तो मानिसको लागी···।

हजलमार : भगवान जानोस्, यो सब त म पनि जान्दछु। तिमीलाई, यति थाहा छैन, सहन सक्नु समय लाग्छ। मलाई सम्हालिनु समय लाग्छ।

ग्रेगर्स : हजलमार, यो तिम्रो उही जंगली हाँसको प्रवृत्ति हो।

*सिँढ़ीको दरवाजाबाट रेलिंग भित्र आउँछ।*

रेलिङ : भन भाइ, के हुँदैछ। फेरि जंगली हाँसको कुरा हुँदैछ?

हजलमार : हो, उसलाई, बूढ़ो वर्लले घाइते बनाएको थियो नी।

रेलिंग : बूढ़ो वर्ल, के वर्लको विषयमा बात हुँदैछ?

हजलमार : हो, आफ्नै बारेमा पनि।

रेलिंग : **(ग्रेगर्सपट्टि संकेत गर्दैधीमा स्वरमा)** भगवान, यो शैतानबाट तिमीलाई छुटकारा दिलाऊ।

हजलमार : के भन्दैछौ?

रेलिंग : म हृदयबाट यही प्रार्थना गर्दैछु कि यो मूढ़ ज्ञानी महाराज यहाँबाट आफ्नो आसन उठाएर घर लैजावस्। यो यहाँ बसिरहे तिमी दुवैलाई डुबाउँछ।

ग्रेगर्स : मि॰ रेलिंग, तिमी चिन्ता नगर। अब यिनीहरूलाई केही बिगार्न सक्तैन। हजलमार विषय केही भन्ने आवश्यकता छैन। उसलाई तिमी र म दुवै जान्दछौ। जहाँसम्म भाउज्यूको प्रश्न छ, मलाई पुरा विश्वास छ कि उसको ह्मदयमा पनि सद्भावना र विश्वास परायणता को अज्रस स्रोत बगि रहेको छ।

गीना : **(रून्चे स्वरमा)** मलाई दुःख दिने के आवश्यकता थियो तिमीलाई? मलाई यस्तै रहनदेऊ।

रेलिंग : **(ग्रेगर्सलाई सम्बोधन गर्दै)** नराम्रो मान्दैनस भने तिमीलाई एउटा कुरा सोधौं? तिमी यिनीहरूकहाँ कुन प्रयोजनले आएको?

ग्रेगर्स : म यिनीहरूको सम्बन्धको, यिनीहरूको बिहेको सत्य और धर्मको आधारमा एक आधारशिला राख्न चाहन्छु।

रेलिंग : तिमीलाई यिनीहरूको सम्बन्ध र विवाहमा के नवीनता लागेको छ?

ग्रेगर्स : हो म जान्दछु, यिनीहरूको सम्बन्ध र विहे त्यस्तैने होस् जस्तो अरूको हुन्छ। तर यिनीहरूको विवाह सम्बन्धलाई पवित्र विवाह सम्बन्ध त भन्न सकिन्न।

हजलमार : रेलिङ तिमीले कहिले सोच्ने प्रयासनै गरेनौ। कसैले तिम्रो मानव-आदर्श पूर्तिको कर्त्तव्य सम्झाएर तिम्रो आँखा खोली दिएन।

रेलिंग : के भन्दैछौ यार, रहन देऊ। तिमी बताऊ ग्रेगर्स, तिमीलाई सोध्दैछु। तिमीले आफ्नो जीवनमा शुद्ध र पवित्र विहेको कतिवटा उदाहरण देखेका छौ?

ग्रेगर्स : मैले एउटै उदाहरण पनि देखेको छुइन।

रेलिंग : औ मैले पनि देखेको छुइन।

ग्रेगर्स : तर मैले अर्के प्रकारको विवाह र सम्बन्ध को सैकड़ौ उदाहरण देखेकोछु। उनीहरूलाई हेरेर म यस परिणाममा पुगेकोछु कि यस प्रकारको सम्बन्धले स्त्री र पुरुष दुवै प्रति दुष्परिणाम भएको छ।

हजलमार : यस्तो स्थितिमा कुनै पनि मानिसको घोर नैतिक पतन हुनसक्छ। यो भन्दा बेसी डरलाग्दो बात अरू के हुनसक्छ।

रेलिंग : सायद तिम्रो कुरा ठीक हो। मैले कहिल्यै विवाह गरेको छुइन। यसैले विवाहित जीवन सम्बन्धी म अधिकारसित केही भन्न सक्दिन। तर म यो भन्न सक्छुकि सन्तान पनि विवाह-सम्बन्धको अंग हुन्छ औ तिमीले सन्तानको जीवनमा आघात पर्न दिनु हुँदैन।

हजलमार : ओहो, हेदविग, मेरी छोरी।

रेलिंग : भगवानले तिमीलाईसुमति देओस्। कमसे कम तिमीहरूको आफ्नो झगड़ाको कारणले हेदविगलाई कुनै दुःख नहोस्। तिमी दुवै पक्का उमेर को हौ। तिमी आफ्नो जीवनसित जतिनै खेलाँची गर, त्यसमा म दखल दिदिन। तर तिमीले हेदविगलाई याद गर्नुपर्छ। म तिमीलाई सावधान गराउँछु कि तिम्रो मुर्खताले उसको जीवन बरबाद हुन सक्छ।

हजलमार : जीवन बरबाद?

रेलिंग : हो, तिम्रो व्यवहारको यो परिणाम हुन सक्छकि उ आफ्नो सर्वनाश औ अरूको पनि सर्वनाश गर्छ।

गीना : रेलिंग भाइ, तपाई के भन्दै हुनुहुन्छ? यस विषय तिमीलाई के थाहा?

हजलमार : अहिले झट्ट त उसको आँखाको लागी केही आशंका छैन। साँचो भन।

रेलिंग : यस समय उसको आँखाको आशंका सम्बन्धी मैले कुरा गरेको छुइन। हेदविगलाई यो उमेरमा धेरै सावधानीको आवश्यकता छ। यो समय कुनै पनि व्यवहारका घटनाले उसको मानसिक अवस्थामा प्रभाव पर्नु सक्छ अनि उसले विचित्र धारणाहरू बनाउँछे।

गीना : मलाई पनि यही चिन्ता छ। मलाई त लाग्छ उसमाथि केही असर परिरहेकोछ। किन हो भान्सा घरमा गएर आगोलाई उल्टाइ पल्टाइ गरिरहन्छे। भन्छे, घरमा आगो लाग्यो भने कस्तो तमाशा हुन्छ। मलाई यही डर लाग्छ कि कुनै दिन साँचैनै आगो लाग्ला।

रेलिंग : सुन, मलाई पनि यस्तै लाग्छ।

ग्रेगर्स : **(रेलिंगलाई सम्बोधन गर्दै)** तर तिमी केटीको यस्तो मानसिक स्थितिको के कारण सम्झन्छौ?

रेलिंग : **(खिन्नसासित)** कारण के हुन्छ। उसको उमेर उ जवान हुँदैछे।

हजलमार : जबसम्म मेरो शरीरमा प्राण छ, तबसम्म उसको चिन्ता गर्न म तयार छु (**सिँढ़ीको दरवाजामा आवाज सुनिन्छ**)

गीना : सुन सुन, पर्ख सिँढ़ीमा कोही छ। (**ठूलो स्वरमा बोलाउँछ**) को हो, आउनोस्। (सिँढ़ीको दरवाजाबाट सूरबी महोदया आउँछे। उसले बाहिर जाने पोशाक लगाएकी छ।

श्रीमती सूरबी : नमस्ते, नमस्ते।

गीना : (**आगन्तुकपट्टि अघिवढ़ेर**) अरे, तपाई हुनुहुन्छ, आउनोस् बस्नोस!

श्रीमती सूरबी : हो, भाइ, म हूँ, म यो समय श्राउनाले केही अप्ठेरो त भएन तिमीलाई? लाग्छ, तिमीहरू केही आवश्यक कुरा गर्दैथियो।

हजलमार : यस्तो केही कुरा छैन। त्यो घरबाट केही सन्देश?

श्रीमती सूरबी : (**गीनापट्टि हेरेर**) साँचो कुरो त यो हो—मेरो विचार थियो, तिमीलाई म एक्लै पाउँछु, मरदहरू बाहिर गएको होला। शहरदेखि बाहिर जाँदैछु। सोचें तिमीलाई भेटेर जाऊँ, तिमीलाई नमस्ते भनेर जाऊँ।

गीना : के यहाँबाट बाहिर जाँदैछौ?

श्रीमती सूरबी : हो, भोलि बिहाननै जान्छु। होदाल आउँदैछु। वर्ल साहब आज दिउँसो हिँड़े। (**ग्रेगर्सलाई हेर्दै**) तपाईलाई नमस्ते भनेर गए।

गीना : तर किन?

हजलमार : अच्छा, साहब, जानुभयो? तपाई उसैकोमा जाँदै हुनुहुन्छ होइन?

श्रीमती सूरबी : हो, किन तिम्रो के बिचार छ?

हजलमार : केही छैन, बस यही हो कि जो गर्नुहुन्छ सोचेर सम्झेर गर्नुहोस्।

ग्रेगर्स : म बताइदिऊ! पिताजी-श्रीमती सूरबी विहे गर्दैछिन्।

हजलमार : बिहे गर्दैछ?

गीना : हो, महोदया साँचैनै।

रेलिंग : (**अस्पष्ट स्वरमा**) के यो साँचो हो?

श्रीमती सूरबी : हो, डॉ. रेलिंग, साँचो हो।

रेलिंग : के फेरि विहे गर्दैछौ?

श्रीमती सूरबी : हो, विवाहनै हुँदैछ। साहबले अदालतबाट विशेष आज्ञा लिएका छनू। होयदालमा विहेहुन्छ, तर कुनै तमाशा जलसा हुँदैन।

ग्रेगर्स : तपाई मेरी सौतेली आमा वन्नुहुन्छ? तपाईको विहेको लागी सौतेले छोरोबात शुभकामना र बधाई।

श्रीमती सूरबी : धन्यवाद, तिम्रो शुभकामनाको लागी अनि तिमीलाई पनि बधाई! मलाई त विश्वास छ यसले साहबलाई सुख औ सन्तोष मिल्छ।

औ मलाई पनि।

रेलिंग : निश्चय, तिम्रो लागी राम्रै हुन्छ। मेरो बिचार छ साहब पिक्कड़ होइन, स्वर्गीय घोड़ा डाक्टर जस्तै नशामालिप्त हुँदैन न त आफ्नो पत्निहरूलाई सताउँछ।

श्रीमती सूरबी : बिचारा डा. साहब को चर्चा गर्न के आवश्यकता छ, उ संसारबाट गइ सकेकोछ। राम्रो नराम्रो सबैमा हुन्छ। उसमा राम्रा गुणहरू पनि थिए।

रेलिंग : मेरो बिचारमा वर्ल साहबमा ज्यादा राम्रा कुराहरू छन्।

श्रीमती सूरबी : एउटा कुरो त पक्का हो, साहब आफैले उजाड़ने बिगार्ने काम गर्दैन। जस्तो जस्तो गर्छ, त्यस्तै फल पाउँछ।

रेलिंग : आज त मौलविकसित जानैपर्छ।

श्रीमती सूरबी : रेलिंग, यो राम्रो होइन, यस्तो नगर्नु , मेरो कुरा मान, मेरै लागी सही।

रेलिंग : तब फेरि के गरूँ (हजलमार पट्टि हेरेर) चाहन्छौ भने तिमी पनि साथ हिँड़।

गीना : होइन, यिनलाई रहन दिनोस्। यिनलाई तपाईसित जस्तो सुकै जगहमा जान दिन्न।

हजलमार : (दबिएको स्वरमा खिन्नतासित) तिमी एकछिन चुप लाग।

रेलिंग : अच्छा, नमस्ते श्रीमतीजी (सिँढ़ीको दरवाजाबाट निस्कन्छ)

ग्रेगर्स : (श्रीमती सूरबीलाई सम्बोधन गर्दै) डा. रेलिंगसित तपाईको धेरै चिनाजाना भएको बुझिन्छ।

श्रीमती सूरबी : हो, किन हुँदैन, धेरै पुरानो परिचय छ। म उसलाई धेरै वर्षदेखि चिन्छु। सायद तपाईको भनाइमा एक समय थियो कि हाम्रो परिचय सम्बन्ध को रूपमा परिवर्तन हुन सक्थ्यो।

ग्रेगर्स : भाग्यले तपाईको साथ दियो। मेरो विचारमा यो कुरो भएन राम्रो भयो।

श्रीमती सूरबी : तपाईको कुरा ठीक हुनसक्छ। म भावनामा बगेको छुइन। स्त्रीको लागि भावुकतामा बहनु उचित पनि होइन।

ग्रेगर्स : तपाईलाई यस कुराको आशंका हुन सक्तैन कि म तपाईको पुरानो मित्रताको कुरो पिताजीलाई भनिदिए के हुन्छ।

श्रीमती सूरबी : म आफैले उसलाई सबै कुरो भने।

ग्रेगर्स : के साँचैनै?

श्रीमती सूरबी : आफ्नो विषयमा मैले तपाईको पिताजीलाई सबै घटनाहरू, सो सच्चाई थियो सबै बताएँ। उसले जब आफ्नो विचार प्रगट गरे

तब मैले सबै कुरो उनलाई बताउन उचित सम्झें। अब उनको लागी कुनै कुरो नयाँ छैन।

ग्रेगर्स : तब म सम्झन्छु, तपाई एकदमै स्पष्टवादी हुनुहुन्छ। साधारणतः यस्तो आशा गर्न सकिन्दैन।

श्रीमती सूरबी : मलाई सँधैनै स्पष्ट बात मनपर्छ। स्त्रीहरूको यसैमा कल्याण छ।

हजलमार : **(गीनापट्टि हेर्दै)**—तिमीलै सुन्यौ, तिम्रो के विचार छ।

गीना : स्त्रीहरूको आफ्ना आफ्ना विचार र स्वभाव हुन्छ। सबै एउटै हुँदैन।

श्रीमती सूरबी : गीना, म सम्झन्छु सीधा स्पष्ट कुरोमानै भलाई छ, यसैले मैले यस्तो गरे। वर्ल साहबले पनि मबाट कुनै कुरो लुकाएर राखेको छैन। यसैले हामी दुइमा कुनै भेद ला अन्तर छैन, एक अर्कामा भरोसा गर्न सकिन्छ। उसले सब कुरो मलाई निःसंकोच नानी जस्तो भन्न सक्छ। यही कुरो त जीवनमा उसले अघि कहिले पाएन। आफ्नो बालकपनमा, आफ्नो पूर्ण जवानीको समयमा जब उ स्वस्थ्य थियो, उनमा बल ताकत थियो। उसर्ल सँधैनै सबै कुरो लुकाएर, पाप सम्झेर गर्नु पर्‍यो। उसको मनमा सँधैनै पापको आशंकाको बोझ रह्यो। पाप पनि के थियो, मलाई त लाग्छ, पापको कल्पना मात्र थियो।

गीना : हो, थो त ठीक हो, यस्तै कुरा थियो।

ग्रेगर्स : **(श्रीमती सूरबी र गीनालाई सम्बोधन गर्दै)** यदि तपाईहरू यस्तै कुराहरू गर्न चाहनु हुन्छ भने, मलाई आज्ञा दिनोस्।

श्रीमती सूरबी : होइन, तपाई किन जानुहुन्छ, बस्नोस्। मलाई अरू केही भन्न छैन। मैले केही चाल चलेको छुइन, म यही भन्न चाहन्थे। कोही प्रपंच गरेको छुइन, कुनै कुरो लुकाएको छुइन। सम्भवतः तिमीलाई संकोच होला कि कुनै ठूलो सम्पत्तिमा हात लगाउँदैछु। यो विवाहबाट साहबले के पाउँछ, म मेरो स्वार्थ पूरा गर्दैछु। गीना, तिमी विश्वास राख यसमा मेरो स्वार्थ छैन। म उनलाई कहिले छोड्न सक्तिन। अब उसकोमा के रहन्छ पनि। यस समय म बाहेक अरू कसले उसको चिन्ता गर्छ।

हजलमार : उसकोमा के रहन्छ पनि!

ग्रेगर्स : **(श्रीमती सूरबीलाई सम्बोधन गर्दै)** त्यस कुराको चर्चा यहाँ नगर्नुहोस्।

श्रीमती सूरबी : साहबले इच्छा गरोस् वा नगरोस् त्यस कुरा लुकाएर राख्नु केही फायदा छैन। उसको नजर त बाँच्न सक्तैन।

हजलमार : (आश्चर्य मानेर)—नजर बाँच्न सक्तैन? यो को कुरा हो साहबको नजर पनि जान्छ!

गीना : धेरैको नजर जान्छ।

श्रीमती सूरबी : सोच त, साहबको लागी नजर गए ठूलो संकट आइलाग्छ, अनि के हुन्छ? कुनै कारबार गर्ने मान्छेको नजर गए उसको के हुन्छ? मेरो आँखालेनै उनको पनि काम चल्छ। अच्छा अब म जान्छु, मलाई धेरै काम सक्नुछ, हूँ गीना, तिमीलाई एउटा कुरा भन्न आएकी थिएँ—यदि तिमीलाई केही आवश्यकता परे, सम्झ साहबले सबै कुरो गर्न सक्छ, तिमीले निःसंकोच ग्रावर्गलाई भन्नु।

ग्रेगर्स : (ब्यंगसित) यो सन्देशको लागी त, म सम्झन्छु, हजलमार अवश्यनै धेरै आभारी रहनुपर्नै।

श्रीमती सूरबी : किन यस्तो के कुरा छ, म जान्दछु अघि पनि

गीना : महोदया, ग्रेगर्सले ठीकै भन्दैछ। अब यिनलाई साहवबाट कुनै प्रकारको सहायताको आवश्यकता छैन, चाँहदैन पनि।

हजलमार : (आत्मासात : धिमा स्वरमा) महोदया, मेरो तर्फबाट साहवलाई सादर धेरै-धेरै धन्यवाद भनिदिनुहोला। औ भन्दिनुहोस कि म छिटो भन्दा छिटो ग्रावर्गलाई भेटछु।

ग्रेगर्स : तिनी साँचैनै उसकोमा जान्छौ?

हजलमार : हो, म ग्रावर्गसित अवश्य भेटछु। म उसलाई सोध्नुछ —मलाई उसको मालिकको कति ऋण छ। ऋण चुकाउनु मेरो कर्तव्य हो। (अट्टहासले हाँस्छ) हा हाः कति गौरवपूर्ण ऋण। खैर छोड़ त्यस कुरालाई। म पाई पाई ऋण चुकाईदिन्छु। पाँच प्रतिशत ब्याज पनि दिन्छु।

गीना : (खिन्नतासित) हाय राम, के भन्दैछौ। हाम्रोमा पैसा नै कहाँ छ?

हजलमार : (श्रीमती सूरबीलाई सम्बोधन गर्दै) आफ्नो मालिकलाई भनिदिनु, मेरो आविष्कार चाँड़ै पुरा हुन्छ। भनिदिनु उसको ऋणको बोझ मेरो लागी असह्य छ। त्यस ऋणबाट मुक्ति पाउन म पूरा शक्तिसाथ अथक परिश्रम गर्दैछु। त्यही आविष्कारको लागी म ज्यान दिएर काम गर्दैछु। आविष्कारको लागी म जुन पैसा पाउँछु, त्यही सबैबाट तिम्रो मालिकले जो मलाई पैसा दिएकोछ त्यो पाई पाई तिरी दिन्छु।

श्रीमती सूरबी : यहाँ केही झगड़ा भएको जस्तो लाग्छ।

हजलमार : त्यसको चिन्ता तिमी नगर।

श्रीमती सूरबी : अच्छा त, नमस्ते। (गीनापट्टि हेरेर) म तिमीसित केही कुरा गर्न

आएकी थिएँ, अब अरू कुनै समय, नमस्ते। (**हजलमार र ग्रेगर्स गर्दनको संकेतले सूरबी बाईको नमस्ते स्वीकार गर्छन्। गीना श्रीमती सूरबी को साथ सिँढीको दरवाजापट्टि** जान्छे।)

हजलमार : (**गीना बाहिर नजाऊ श्रीमती सूरबी बाहिर जान्छे**) गीना दरवाजा बन्द गर्छे। यो एकदमै राम्रो भयो, ग्रेगर्स, यो ऋणको भारबाट मुक्ति पाएँ।

ग्रेगर्स : हो, चाँड़ैनै अवश्य यसबाट मुक्ति पाउँछौ।

हजलमार : के विचार छ, मैले राम्रै व्यवहार गरें?

ग्रेगर्स : निश्चय, तिमीलाई विश्वास थियो।

हजलमार : यस्तो परिस्थितिमा मानव आदर्शको पूर्तिको कर्त्तव्यको उपेक्षा कसरी गर्न सकिन्छ। म यो भारले दबिएर तड़पी-तड़पी छटपटाई रहेको थिएँ। तिमीलाई के बताऊँ परिवार पाल्ने उत्तरदायित्व शिरमा छ भने बर्षौं पुरानो ऋण तिर्नु खेलाँची कुरो होइन। ऋण पनि यति पुरानो कि हिसाब राख्नु पनि सम्भव छैन तर गर्नै पर्थ्यो। म आत्म गौरवलाई कसरी कुल्चनु, उसको पनि मूल्य छ।

ग्रेगर्स : (**हजलमारको कुममा दुवै हात राखेर**) हेर मित्र, म आएरनै यो सब भयो।

हजलमार : ठीक भन्दैछौ।

ग्रेगर्स : तिमी बताऊ, यो राम्रो भयो कि पूरा परिस्थिति तिम्रो सामने स्पष्ट भयो।

हजलमार : (**आफ्नो चिन्ता दवाएर**)—हो, अवश्य, राम्रो भयो। तर एउटा कुरा मलाई राम्रो लागेको छैन।

ग्रेगर्स : त्यो कुन कुरो?

हजलमार : कुरा यो हो, म कसरी बताऊँ। तिम्रो अघि तिम्रो पिताको कुरा कसरी गरूँ।

ग्रेगर्स : मेरो सम्बन्धमा यस्ता कुरा गर्नु बिल्कुल उचित! चिन्ता नगर।

हजलमार : तिमीलाई के भनौ दुवै पट्टिको स्थिति हेर्दा मनमा कलंक लाग्छ। तथ्य त यो हो कि पवित्र विहेको सम्बन्धको सन्तोष पनि मेरो होइन तर साहबको भाग्यमै छ।

ग्रेगर्स : यो तिमी के भन्दैछौ।

हजलमार : म बिलकुल ठीक भन्दैछु। तिम्रो पिता र श्रीमती सूरबी परस्पर पूर्ण विश्वासको आधारमा हृदयको पूर्ण निश्छलतासित विवाहको सम्बन्ध स्थापित गर्दैर्छन्। उनीहरू दुवैले एक अर्कीमा केही लुकाएका छैनन्। उनीहरूको बिचमा कुनै पाखण्ड वा छलको

प्रभाव छैन। यो भन्नु उचित होला कि उनीहरूले एक अर्काको अपराध र पापको लागी उन्मुक्त हृदयले क्षमा दिएका छन्।

ग्रेगर्स : हुन सक्छ, यदि यस्तो कुरा हो भने पनि के भयो।

हजलमार : वाह! त्यही त वास्तविक कुरा। हाम्रो कठिन स्थितिमा त्यसै वस्तुको आवश्यकता छ। त्यसै त सम्बन्धलाई पवित्र विवाहको आधार मानिन्छ। तिमी आफैले पनि यही बात भनेको थियौ।

ग्रेगर्स : होइन हजलमार, म विलकुल अर्कै बात गर्दैछु। तिमी आफ्नोर पत्नीको तुलना यिनीहरूसित कसरी गर्न सक्छौ। तिमीले मेरो अभिप्राय बुझ्यौ होइन।

हजलमार : जे पनि होस्, मलाई त यस्तो लाग्छ कि यस स्थितिमा म प्रति न्याय भएको छैन। जम्मै कुरोमा ध्यान दिएर म त यही देख्छु कि ईश्वरीय न्याय जस्तो अरू कुनै वस्तु छैन।

गीना : हाय राम, के भन्दैछौ? डर लाग्दैन, यस्तो कुरा नगर।

ग्रेगर्स : हुँ! मेरो विचार छ, यो प्रश्ननै उठाउनु उचित छैन।

हजलमार : तर म त अर्कै कुरा देख्दैछु। सबैकुरा हुँदा हुँदै पनि यस कुरामा विधाताको हात स्पष्ट देखिन्दैछ। अन्तमा उ अन्धा हुँदैछ।

गीना : कसले जान्दछ! पक्का कुरा हो कि होइन, नहुनु पनि सक्छ।

हजलमार : होइन, होइन, उ निश्चय नै अन्धो हुन्छ। विधाताको न्यायमा कसरी सन्देह गर्न सकिन्छ। यस्तो नभए कर्मको फल कसरी पाउने। कर्मफल त पाउँछनै। उसले सँधैनै सिधा साधा मानिसलाई अन्धा बनाउँदै, इमान्दारीलाई धोका दिँदै आएकोछ। त्यसको फल पाउँदैन!

ग्रेगर्स : **(गहिरो सास लिएर)**—हो, यस्तो त उसले धेरै मानिसहरूसित गर्‍यो।

हजलमार : औ अन्तमा अब उसको समय आयो। कर्मको अटल गतिको प्रतिफलमा उसलाई अन्धोपनको दण्ड दिइरहेको छ। यो न्याय अनिवार्य छ।

ग्रेगर्स : हाय राम, तिमी के भन्दैछौ। तिमीलाई डर लाग्दैन। यस्तो कुरोले मेरो मनमा केही भएको जस्तो लाग्छ।

हजलमार : म त सम्झन्छु, कहिले काहीँ जीवनको अन्धकारमा पनि हुब्नुपर्छ।

*हेदविग बाहिरको दरवाजाबाट फर्केर आउँछे टोपी र कोट लगाएकोछ। छिटो हिँड़ेकोले उसको सास बढ़ेको छ। उसको अनुहार प्रसन्न औ प्रफुल्लित छ।*

गीना : अरे छोरी फर्केर आइस्।

हेदविग : आमा, टाड़ो जाने इच्छा भएन। आमा, म फर्केर आएको राम्रो भयो। भन्नुहोस, दरवाजामा मैले कसलाई भेटें।

हजलमार : श्रीमती सूरबी लाई भेटिस होला।

हेदविग : हो हो।

हजलमार : (**कमरामा ओहोर दोहोर गर्न लाग्छ**) छोरी, अब उसित कुरा नगर्नु।

*हेदविग छक्क परेर पलभर सोच्छे। उनको अनुहारको प्रफुल्लता हराउँछ। उ पालैसित आमा र बाबुको अनुहार हेर्दै स्थिति बुझ्ने कोशिस गर्छे।*

हेदविग : (**पिताको नजिक गएर स्नेहले पुकार्छे**)—

हजलमार : किन, के भयो हेदविग।

हेदविग : सूरबी आन्टीले मेरो लागी केही ल्याएकी थिई।

हजलमार : (**कदम रोकेर उभिन्छ**)—तिम्रो लागी।

हेदविग : हो पापा! आन्टीले मलाई भोलिको लागी एउटा चीज दिएर गएकी छ।

गीना : यसको जन्मदिनमा सँधैनै सूरबीले केही न केही पठाउँछे।

हजलमार : के दिएर गई।

हेदविग : आण्टीले अहिले नदेखाउनु भनेकी छ। आमालाई दिन्छु। आमाले भोलि विहान मेरो आँखा खोल्नसाथै मलाई दिन्छे।

हजलमार : यो त कुनै रहस्य हो, सब रहस्य मबाटनै लुकाउनु।

हेदविग : (**व्यग्रतासित**) होइन होइन, पापा, तपाई चाहनु हुन्छ भने अहिले हेर्नुहोस्। एउटा ठूलो पत्र छ। (**कोटको गोजीबाट लिफाफा निकाल्छे**)

हजलमार : के भन्यौ। पत्र छ।

हेदविग : अहिले पत्रमात्र दिएर गई। सायद उपहार भोलि पठाउँछे। पापा हेर्नुहोस्। पत्र मेरो नाममा छ। लेखेकी छ—कुमारी हेदविग एकदल। मेरो लागी पहिलो पटक पत्र आएको छ।

हजलमार : अलिक हेरौ त।

हेदविग : लिनुहोस् (**पत्र पितापट्टि बढ़ाएर दिन्छे**)

हजलमार : (**पत्र ध्यानपूर्वक हेरेर**) यो त बूढ़ी वर्लको हातले लेखेको पत्र हो।

गीना : साहबले लेखेको।

हजलमार : तिमी आफै हेर (**पत्र गीनापट्टि दिन्छ**)

गीना : मलाई देखाउँनु हुँदैछ, म के जान्नु?

हजलमार : हेदविग, म लिफाफा खोलेर पढौं।

गीना : अहिले किन खोल्ने। भोलिको लागी दिएको, भोलिनै पढ़।

हेदविग : **(आमापट्टि हेरेर मधुरो स्वरमा)** आमा, के हुन्छ, अहिले पढ्नदेऊ। राम्रै कुरानै होला। पापा पढेर प्रसन्न भए सबै खुशी हुन्छौं।

हजलमार : म लिफाफा खोलुँ।

हेदविग : हुन्छ पापा, खोल्नुहोस्, हेरौ लिफाफाबाट के निस्कन्छ।

हजलमार : राम्रो, **(लिफाफा च्यातेर पत्र निकाल्छ)** जति जति पत्र पढदै जान्छ, उसको अनुहारमा विस्मयको भाव देखिन्छ। यो सबको अभिप्रायः के हुनसक्छ? आखिर यसको मतलब के हो?

गीना : किन, के लेखेकोछ?

हेदविग : पापा, बताउनु होस!

हजलमार : एक छिन चुप लाग **(पत्र ध्यानपूर्वक दोस्रो पटक पढ्छ। उसको अनुहारको रंग बदलिन्छ। आफैलाई सम्हालेर बोल्छ)**—हेदविग, यो त तिम्रो नाममा दानपत्र रहेछं।

हेदविग : साँचैनै पापा, म के पाउँछु?

हजलमार : तिमी आफै पढ। **(छोरी लेम्पको नजिकमा गएर पत्र पढछे। हजलमार आफ्नो हातका औंलीहरू खेलाउँछ, स्वतः बोल्छ)**—आँखा, आँखा, औ यो· पत्र··· ।

हेदविग : **(पत्रबाट आँखा उठाएर)** हो पापा, मलाई लाग्छ त्यो पिताजीले पाउँछ।

हजलमार : **(छोरीबाट पत्र लिएर)**—गीना, तिम्रो के विचार छ, यसको के मतलब हो?

गीना : म के भनुँ, तिमीनै बताऊ।

हजलमार : बूढ़ो वर्लले हेदविगको नाममा लेखेको छ। अब तिम्रो बाजेले दस्तावेज नकल गर्ने कामको दुःख गर्ने केही आवश्यकता छैन। दफ्तरबाट उसले महीनामा पाँच पाउण्ड पाउनेछ।

ग्रेगर्स : ओ हो!

हेदविग : साँचै आमा, पाँच पाउण्ड, मैले पढ़ेको।

गीना : राम्रो भयो पिताजीलाई आराम हुन्छ।

हजलमार : पाँच पाउण्ड महीना, जबसम्म उ चाहन्छ। अभिप्रायः स्पष्ट छ जबसम्म उ जीवित रहन्छ।

गीना : धेरै राम्रो भयो, विचाराको बूढेसकालमा सहारा भयो।

हजलमार : होइन अरू पनि छ हेदविग! तिमीले पुरै कुरा पढ़ेनौ। पिताजीको पछि यो दान तिम्रो नाममा हुन्छ।

हेदविग : मेरो नाम, सब रूपिया।

हजलमार : पत्रमा लेखेको छ, यो पैसा प्रति महीना तिमीले जीवनभर पाउँछौ,

गीना : मलाई के थाहा, तिमी के भन्दैछौ, तिमी आफै जान।
हजलमार : म यो जान्न चाहन्छु कि तिम्रो छोरीको मेरो घरमा वस्ने अधिकार छ?
गीना : **(उसको आँखामा चमक आउँछ, गहिरो सास लिन्छ)** के सोध्यौ तिमीले?
हजलमार : तिमीले उत्तर दिनुपर्छ। हेदविग कस्को छोरी हो। मेरी वा···? बोल।
गीना : **(हजलमारपट्टि उपेक्षालै हेर्दै)** मलाई थाहा छैन।
हजलमार : **(क्रोधित भएर)** तिमीलाई थाहा छैन?
गीना : म के बताउन सक्छु, म जस्तो स्त्री।
हजलमार : **(गीना पट्टिवाट आफ्नो मुख फर्काउँदै)** अब यो घरमा मेरो केही सम्पर्क छैन।
ग्रेगर्स : हजलमार, सोचेर सम्झेर, कुरा गर।
हजलमार : **(काँटीवाट ओवरकोट निकालेर** लाउँछ) म जस्तो मान्छेको लागी अब के छ। सोच्ने सम्झने कुरो के रह्यो।
ग्रेगर्स : होइन मित्र, अब त सोच्ने समय आएकोछ। तिमी तीन जना एकसाथ रहनु नितान्त आवश्यक छ। यही अवस्थामा तिमी क्षमा र अहंकारको त्यागको आदर्श प्राप्त गर्न सक्छौ।
हजलमार : होइन, मलाई त्यसको कोही चिन्ता छैन। मेरो टोपी कहाँ छ **(आफ्नो टोपी लिन्छ)** मेरो घर समाप्त भयो, मेरो संसार समाप्त भयो। (आँखामा आँसु देखिन्छ) ग्रेगर्स, अब मेरो संसारमा कोही छैन, न पत्नी, न छोरी!
हेदविग : **(भान्सा घरको दरवाजा खोलेर बोलाउँछ)** पापा, के भन्दैछौ? **(पिताजीको नजिक आउँछे)** पापा, पापा।
गीना : हे राम, तिमीलाई के भयो?
हजलमार : **(छोरीलाई पछि हटाउँदै)** यहाँ नआइज, पर जा, मेरो आँखाको सामने बाट हट्। उफ् आँखा, मलाई जान देऊ **(दरवाजा पट्टि अघि वढछ)**
हेदविग : **(दौड़न्दै गएर पितासित टालिन्छे औ चिच्याउँछे)** होइन, होइन, पापा नजानुहोस्।
गीना : **(रूँदै उढ्छे)** के गर्दैछौ, छोरीको त याद गर।
हजलमार : होइन मलाई जान देऊ। म बस्तिन। म यहाँ बस्न सक्तिन। पर हट, जाऊ **(छोरीलाई पर हटाउँछ औ बाहिरको दरवाजावाट निस्कन्छ)**
हेदविग : **(आँसु वहाउँदै निराशासित)** आमा, पापा जानुभयो, हामीलाई

छोडेर, अब आउँदैन।

गीना : छोरी, नरोऊ, पापा आउँछ, छिटै फर्केर आउँछ।

हेदविग : **(सोफामा लड़ेर कहालिएर रून्छे)** होइन, आउँदैन, पापा फर्केर आउँदैन।

ग्रेगर्स : भाउज्यू, विश्वास राख, मैले त तिमीहरू सबैको भलाइको लागीनै यस्तो गरेको थिएँ।

गीना : भगवान जानोस्, तिमीले भलाईको लागीनै गर्‍यौ होला, तिम्रो भलो होस्।

हेदविग : **(सोफामा मुख लुकाएर)** हाय, म मर्छु, हाय, मसित किन रिसाउनु भो। आमा, पापालाई बोलाउनुहोस्न।

गीना : तिमी चुप लाग, नरोऊ। म अहिले गएर तिम्रो पापालाई बोलाएर ल्याउँछु। **(बाहिर जानलाई कोट लगाउँछे)** सायद, तल डाक्टरकोमा गएको होला। तिमी चुप लाग्यौ भने म उसलाई बोलाउन जान्छु। भन त रूँदिन भनेर।

हेदविग : **(सुँक सुँक गर्दै)** तिमी पापालाई बोलाऊ, पापा आयो भने म रूँदिन।

ग्रेगर्स : **(बाहिर जाँदै गरेकी गीनालाई सम्बोधन गर्दै)** भाउज्यू, मेरो विचारमा, एक छिन पर्ख। उसलाई मन र निर्णय स्थिर गर्ने समय देऊ।

गीना : त्यो सब गर्दै गर। पहिल्ले छोरीलाई सम्हाल्नुपर्छ। **(बाहिर जान्छे)**

हेदविग : **(सोफामा सिधा बसेर आँखा पुछ्छे)** काका, साँचो भन्नुहोस्, कुरा के भयो। पापा मसित किन रिसाउनु भयो··· किन जानुभयो?

ग्रेगर्स : तिमीले अहिले बुझ्दैनौ। जब तिमी ठूली हुन्छौ तब यस्ता कुराहरू बुझ्छौ।

हेदविग : **(आँसुको घुटको पिउँदै)**—म सानी छु भनेर म रूँदै बसुँ। म ठूली भएर पनि यसरीनै रूँदै छटपटाइ बसुँ। मैले बुझि सकेकोछु कुरा के छ। सायद म पापाको छोरी होइन।

ग्रेगर्स : **(द्विविधामा)** हँ, यो तिमी के भन्दैछौ?

हेदविग : आमाले मलाई कतै पाएकीं हुनसक्छ। औ पापालाई यो थाहा भयो। मैले धेरै यस्ता घटनाहरू किताबमा पढ़ेकीछु।

ग्रेगर्स : अच्छा मानिलेऊ, यस्तै कुरा भएकोछ भने।

हेदविग : हो, यस्तो हो तर पनि पापाले मलाई माया गर्न सक्थे, औ इच्छा भए अझ बेसी माया गर्न सक्थे। जंगली हाँस पनि त बाहिरबाट आएको हो। तर पनि म उसलाई कति माया गर्छु।

ग्रेगर्स : **(प्रसंग बदली गर्दै)**—जंगली हाँस, ठीक त भन्दैछौ। अच्छा, जंगली हाँस अहिले कस्तो छ।

हेदविग : हाय विचारा जंगली हाँस। पापा जंगली हाँससित खुशी छैन। के बताऊँ, भन्दैथ्यो—मन चाहन्छ कि उसको गर्दन भाँचिदिऊ।

ग्रेगर्स : होइन, नडराऊ, उसले यस्तो गर्न सक्तैन।

हेदविग : हो, गर्नु त सक्तैन। तर उसले भनेपछि मलाई एकदमै डर लाग्यो। म त राती सँधैनै जंगली हाँसको लागी भगवानसित प्रार्थना गर्छु—भगवानले संकट अनि मृत्युदेखि उसको रक्षा गरोस्।

ग्रेगर्स : **(छोरीपट्टि ध्यानले हेर्दै)**—तिमी राती प्रार्थना गर्छौ?

हेदविग : ज्यू, हो।

ग्रेगर्स : प्रार्थना गर्नु तिमीलाई कसले सिकायो?

हेदविग : म आफैले सिकेको। एक चोटि पापा साहै बिमार हुनुभयो, उनको गर्दनमा औषधी गर्नु परेको थियो। मानिसहरूले बाँच्दैन भन्थे।

ग्रेगर्स : अच्छा, यस्तो भएको थियो?

हेदविग : एक दिन ओछ्यानमा सुत्न जाँदा मैले भगवानसित प्रार्थना गरेको थिएँ। त्यस दिनदेखि सँधै प्रार्थना गर्छु।

ग्रेगर्स : अब तिमी जंगली हाँसको लागी पनि प्रार्थना गर्छौ?

हेदविग : ज्यू हो। जब जंगली हाँस यहाँ आएको थियो त्यस समय त्यो बिमार र कमजोर थियो। त्यस समय मैले सोचे, उसको लागी पनि प्रार्थना गरे उ स्वस्थ हुनेछ।

ग्रेगर्स : तिमी विहान पनि प्रार्थना गर्छौ?

हेदविग : होइन, विहान गर्दिन।

ग्रेगर्स : किन विहान गर्दैनौ?

हेदविग : विहान त उज्यालो हुन्छ औ उज्यालोमा केही डर हुँदैन।

ग्रेगर्स : सुन, तिमी जंगली हाँसलाई खुब प्यारो गर्छौ औ तिम्रो पापा उसको गर्दन भाँचिदिन्छु भन्छ।

हेदविग : होइन त्यसो गर्दैन। मनको इच्छा भनेको मात्र हो तर यसो गर्दैन। उसले मलाई बहुत माया गर्ने। पापा एकदमै राम्रो हुनुहुन्छ।

ग्रेगर्स : **(हेदविगतर्फ वढ़ेर)**—अच्छा तिमी भन, आवश्यकता परे पापाको लागी तिमी जंगली हाँसलाई त्याग्न सक्छौ?

हेदविग : **(उठेर उभिन्छे)** जंगली हाँसलाई··· ।

ग्रेगर्स : तिम्रो पापाको लागी संसारको एकदमै प्यारो वस्तु त्याग्न परे सक्छौ?

हेदविग : त्यसो भए पापा फर्केर आउँछ।

ग्रेगर्स : हेदविग, कोशिश गरेर हेर न।

हेदविग : **(उसको आँखा चम्कन्छ औ शोर कोमल हुन्छ)**—अच्छा, म गर्छु।

ग्रेगर्स : सोच, गर्न सक्छौ, यति साहस छ, पूरा विश्वास छ।

हेदविग : म पिताजीलाई जंगली हाँसलाई गोलीले मारिदिनु भन्छु।

ग्रेगर्स : अच्छा ठीक छ, तर यस विषय आमासित एकदमै कुरा नगर्नु।

हेदविग : किन? आमासित किन नगर्नु।

ग्रेगर्स : उसले हाम्रो कुरो बुझ्दैन।

हेदविग : जंगली हाँसलाई, अच्छा, म विहान गराइदिन्छु। **(गीना सिँढ़ीको दरवाजाबाट आउँछे। हेदविग आमापट्टि अघि चढ़छे)** आमा, पापा भेट्यौ?

गीना : छोरी, भेटिन तर थाहा लाग्यो उ रेलिंगसित बाहिर गएको रहेछ।

ग्रेगर्स : के ठीक पता लगायौ?

गीना : हो, चौकिदारनीले बताई। उसले भन्दै थिइ, मौलबिक पनि उसकै साथ गएकोछ।

ग्रेगर्स : यस्तो अवस्थामा, यस्तै अवस्थामा त उसलाई एकान्तमा गूँढ़ चिन्तनद्वारा आफ्नो मनमाथि विजय पाउने नितान्त आवश्यक थियो।

गीना : **(टोपी र कोट उतार्दै)**—अरे, पुरुषलाई भला सम्झन्छौ, को जान्दछ, कहिले के गर्छ। भगवान जानोस्, रेलिङले उसलाई कहाँ लग्यो। बुढ़िया एरिक्सनको हलमा हेरेर आएँ, त्यहाँ त थिएन।

हेदविग : **(आँसु रोक्दै)**—आमा, यदि पापा फर्केन भने।

ग्रेगर्स : नघवड़ाऊ, तिम्रो पापा निश्चयनै आउँछ। उसलाई भोलि विहान एउटा सन्देश दिनु थियो। हेर्नु, उ अवश्यै आउँछ। तिमी चिन्ता नगर, विश्वास राख। जाऊ सुत, नमस्ते! **(सिढ़ीको दरवाजाबाट जान्छ)**

हेदविग : **(आमासित टाँसिएर सुँक सुँक गर्न थाल्छे)** आमा! आमा!!

गीना : **(छोरीको पिठ्यूमा स्नेहसित सुमसुमाउँदै)** त्यही कुरा हो—रेलिगंले ठीकै भन्दैथ्यो। पगला मानिस आएर शिर न पुच्छरको आदर्शको कुरा बक्न थाले, यस्तै हुन्छ।

❒❒❒

# पाचौं दृश्य

[हजलमार एकदलको स्टुडियो। खिरकीहरूमा हेमन्तको प्रभातको धमिलो निस्तेज धूप भित्र आइरहेकोछ। छानाका खिरकीहरूमा ठूला-ठूला ऐनाहरूमा चिसो हिउँ छप छप देखिन्छ। गीना भान्सा घरबाट निस्कन्छे। घरको काम काजको सुबिधा र मैलाबाट बाँच्नलाई कम्मरमा एप्रोन बाँधेकोछ। उसको एक हातमा झाडु औ अर्को हातमा झाड़न छ। बैठकको दरवाजातर्फ जाँदैछे। त्यसै समय सिँढ़ीबाट हेदविग हतारिन्दै आँउछे]

गीना : (हेदविगलाई देखेर रोकिन्दै)—के भयो?

हेदविग : आमा, म बताँऊ, पापा सायद तल डाक्टर अंकलको कमरामा छ।

गीना : के भन्दैछौ?

हेदविग : आमा, चौकिदारनीले भन्दैथिइ कि डा॰ अंकल जब राती फर्कन्दैथिए तब उसको साथमा दुइ अरू ब्यक्तिहरूको आवाज पनि सुनेकी थिई।

गीना : म पनि यही सोच्दै थिएँ।

हेदविग : तर यो कुरो राम्रो होइन। पापा अंकलको कमरामा थियो त यहाँ किन आएन?

गीना : अच्छा, हेरौं। म तल गएर उसित बात गर्छु।

*बूढ़ा एकदल आफ्नो कमराबाट आँउछ। उसले रातीको लामो बस्त्र लगाएकोछ। खुट्टामा स्लीपर छ, कंकट सल्काएकोछ।*

एकदल : सुन हजलमार, हजलमार छैन?

गीना : छैन बाहिर गएको छ।

एकदल : यति विहानै, बाहिर त जोरको विसो आँधी छ। अच्छा, उसैले जानोस् उसको काम जानोस्। म विहान घुम्न एक्लैनै जाँदैछु।

*बूढ़ो बुँइगलीको दरबाजा खोल्नलाई तान्छ। हेदविग अघि सरेर उसको सहायता गर्छे। बूढ़ो बुँइगल जान्छ। हेदविगले दरवाजाताननेर बन्द गर्छे।*

हेदविग : **(आमालाई हैर्दै दविएको स्वरमा)**—आमा, सुन, पिताजीलाई पापाले घर छोड़ेर गएको थाहा भए के भन्छ।

गीना : चुप लाग, पिताजीलाई भन्ने केही आवश्यकता छैन। भगवानले दया गरे, हिज यहाँ झगड़ा हुँदा पिताजी थिएनन्।

हेदविग : तर आमा, **(बाटोको दरवाजाबाट ग्रेगर्स स्टुडियोमा आउँछ)**

ग्रेगर्स : भन्नुहोस्, हजलमारको केही खबर पायौ?

गीना : सुन्दैछु, तल डाक्टरकोमा छ।

ग्रेगर्स : रेलिंगकोमा। के हिज उहीसित बाहिर गएको थियो?

गीना : अनि के, हिज उसैको साथ गएको हुनुपर्छ।

ग्रेगर्स : अच्छा, तर उस…माथि उसले आपनो चित्त स्थिर गर्नुपर्थ्यो। उसको लागी एकान्तमा बसेर मनन गर्नु नितान्त आवश्यक छ।

गीना : हो, हुनु सक्छ। तिमीले ठीकै भन्दै छौ।

*बाटोको दरवाजाबाट रेलिंग जान्छ।*

हेदविग : **(रेलिंगपट्टि बढ़ेर)**—अंकल, पापाजी तपाईकोमा छ?

गीना : **(छोरीको साथै बोल्छे)**—तपाईको कमरामा छ?

रेलिंग : हो हो, मेरोमानै छ।

हेदविग : तपाईले हामीलाई बताउनु भएन।

रेलिंग : हो केही मुर्खता त भयो तर सबभन्दा ठूलो समस्या त त्यस राक्षस पण्डित मेरो अभिप्रायः हो—पादरीले सम्झनु पर्ने। फेरि मलाई यस्तो निद्रा लाग्योकि केही सम्झनानै रहेन।

गीना : आज केही भन्यो उसले?

रेलिंग : नवोली बसेकोछ।

हेदविग : पापाले तपाईसित केही कुरा गरेन?

रेलिंग : एकदमै बोलेन।

ग्रेगर्स : हो, कसरी बोल्छ, म बुझ्छु।

गीना : अन्त के गर्दैछ?

रेलिंग : सोफामा सुतिरहेको छ घुर्दै।

गीना : अच्छा? घुर्नु चै बहुत जोड़ले घुर्छ।

हेदविग : सुतेकोछ? के निद्रा आयो?

रेलिंग : अरू के भनु, सुतेको जस्तै लाग्छ।

ग्रेगर्स : हो हो, सम्झन्दैछु। यति विकट मानसिक संघर्षले क्षुब्ध भएको मानिस थाक्छ नै।

गीना : उसलाई राति घुम्ने बानी पनि छैन।

हेदविग : आमा, म बताऊँ, पापालाई निद्रा लागे राम्रै हो।

गीना : हो, राम्रै हो, अहिले उठाउनु ठीक होइन। सुत्नु देऊ। डाक्टर साहब, तपाईले ठूलो सहायता गर्नुभयो। तपाई बस्नुहोस्, म तबसम्म उता छिटो झाडु लगाउँछु। सबै कुरै लथालिङ्गै छ। तब फेरि, हेदविग, तिमी पनि आऊ र मलाई सघाऊ।

*गीना र हेदविग दुवै बैठकमा जान्छन्।*

ग्रेगर्स : **(रेलिंगलाई सम्बोधन गर्दै)**—कसो भाइ डाक्टर के भन्छौ! हजलमारको आत्मामा जो संघर्ष चलिरहेकोछ, त्यस विषय तिम्रो के बिचार छ?

रेलिंग : जहाँसम्म मैले बुझन सकेकोछु, मलाई त उसमा आत्मिक संघर्षको कुनै लक्षण देखिन।

ग्रेगर्स : के भन्दैछौ? उ कति विकट मानसिक संघर्षको भुमरीमा फँसेको छ। उसको सम्पूर्ण जीवनको आधारनै बदलिएकोछ। तिमी कसरी कल्पना गर्नसक्छौ कि हजलमार जस्ता मानिसको व्यक्तित्व…।

रेलिंग : व्यक्तित्व! उसको व्यक्तित्व! यदि हजलमारको विशिष्टताको जसलाई तिमी व्यक्तित्व भन्छौ। कहिले केही सम्भावना रहेको छ भने विश्वास गए। हजलमारको बालकपनमानै गई सको छ।

ग्रेगर्स : तिमी पनि के भन्दैछौ? जस्तो स्नेह र सावधानीसित उसको लालन-पालन भएको थियो, त्यस परिस्थितिमा उसको व्यक्तित्व समाप्त हुने के कारण हुन सक्छ?

रेलिंग : ओ हो, तिमी हजलमारको उ दुवै आधा पागल, सनकी, संडी छेमाहरूको कुरा गर्दैछौ?

ग्रेगर्स : तिमी जान्दैनौ, उ दुवै स्त्रीहरू धर्मभीरू…तर यस्तो कुराहरूको मसित खिल्ली उड़ाउँछौ?

रेलिंग : होइन, मैले किन दिल्लगी गर्ने। उसको विषयमा मैले धेरै कुरा सुनेकोछु। हजलमारले उनीहरूको बड़ो प्रसंशा गर्छ। तर उनीहरूको कृपाले हजलमारको कल्याण भएको म सम्झन्दिन। उसको यही दूर्भाग्य हो कि सबैले उसलाई देवता सम्झे, उसको पाउ धरतीमा टेक्न परेन, उसलाई मानिस बन्न दिएन।

ग्रेगर्स : तिमी उसलाई एकदमै साधारण मानिस सम्झन्छौ? उसको गहिरो सूझ र प्रतिभा को तिमी अस्वीकार गर्न सक्छौ?

रेलिंग : मैले त उसका प्रतिभाको केही लक्षण देखिन। हो उसको पिता लाई हजलमारको प्रतिभामा विश्वास थियो। बूढ़ो उमेर भरीनै अधवेस्रो भएर बसे।

ग्रेगर्स : यसमा के सन्देह छ, निश्चयनै उसको हृदय बालसुलभ बालकहरू जस्तो रह्यो तर तिमी त बुझन चाँहदैनौ।

रेलिंग : हुन्छ सक्छ। वास्तवमा त तिम्रो यो हजलमार जब स्कूलमा भर्ती भयो, मानिसहरूले उसलाई एउटा बेग्लै श्रेणीको छात्र समझे। विषेष होनहार, भावी महापुरुष सम्झन लागे। हेर्दा, गोरो सुन्दर, सबैले केटीहरूको कृष्ण जस्तै सम्झन्थे। छुलबुले स्वभाव और शोर पनि राम्रो भएको। प्रतिभाशाली भयो। अरू केटाहरुको कुरा गरे यिनी नाक खुम्चाउँथे।

ग्रेगर्स : (**खिन्नतासित**)—तिमी हजलमार सम्बन्धी कस्तो कुरा गर्दैछौ?

रेलिंग : ज्यू, नराम्रो नसम्झनु होस्। वास्तविकता यही थियो। तिमी उसलाई शिरमा चढ़ाएर पूजा गर्दै बस।

ग्रेगर्स : हाम्रो पनि त आँखा थियो, हामी अन्धा थिएनौ।

रेलिंग : तिम्रो आँखा जरूरथियो तर म तथ्य भन्दैछु। तिम्रो त आफै बुझनुमा फरक देखिन्दैछ।

ग्रेगर्स : हो सम्झने कुरा ठीक हो।

रेलिंग : बिलकुल ठीक, तिम्रो आफ्नो बुझाइमानै केही चक्कर छ। एक त तिम्रो आदर्शबादको जरोको गर्मीले तिम्रो दिमाग ठीक रहँदैन, अर्को तिमी मानिसहरूलाई देवता बनाउने सवारमा रहन्छौ। तिम्रो उसित केही लेनदेन छैन। व्यर्थमा उसलाई शिरमा चढ़ाएर उसको दिमाग खराब गरिदिन्छौ।

ग्रेगर्स : मेरो कसैसित केही लिनुदिनु छैन (**यसैले म निःस्वार्थ** भावले हेर्नु **र बुझनु सक्छु)**

रेलिंग : तर तिम्रो विचारमानै फरक छ। तिमी उसलाई आँखाको सामने राखेर उसको लागी पहाड़को कल्पना गर्न लाग्छौ। तिमी सबै ठाँउमा देवता पाउँछौ। यहाँ पनि एउटा देवतालाई फसाँएको छौ। मानव आदर्शको पूर्तिको कर्त्तव्यको किला बालुवाको आधारमा खड़ा गर्न चाहन्छौ। तर विचार यस घरका मानिसरू त अधिबाटै दिवालिया भइसकेकाछन्।

ग्रेगर्स : हजलमारलाई तिमी साँचैनै यति निकम्मा मानिस सम्झन्छौ कि तिमी सँधै उसको पछि लागेरके सन्तोष पाउँछौ?

रेलिंग : भगवानले तिमीलाई राम्रो बुद्धि देओस्। तिमीलाई त विश्वास छैन तर मानिसले सम्झन्छ कि म डाक्टर हुँ। डाक्टर भएको हुनाले यो मेरो कर्तव्य हो कि आफूसित बस्ने बिमारीहरूको याद गर्नु।

ग्रेगर्स : अच्छा, त हजलमार पनि बिमार छ, उसको पनि दिमाग ठीक

छैन।

रेलिंग : यही बात हो। संकट त यो छ कि संसारमा ठीक दिमाग भएको मानिस पाउन कठिन छ।

ग्रेगर्स : हजलमारको बिमारको तिमी के उपचार गर्दैछौ?

रेलिंग : यस्ता मानिसको लागी एउटै उपचार छ कि यिनीहरूको जीवनबाट आशाको भ्रम नमेटिओस्।

ग्रेगर्स : आशाको भ्रम, के भन्यो तिमीले, फेरि भन।

रेलिंग : हो, ठीक हो। मैले भने—आशाको भ्रमलेनै यस्ता मानिसहरूलाई स्फूर्ति दिन सक्छ।

ग्रेगर्स : म सोघ्न सक्छुं, हजलमारको जीवनको लागी तिमीले कस्तो आशाको भ्रमको बन्दोबस्त गरेकाछौ।

रेलिंग : होइन, यो तिमीलाई बताउन सक्दिन। यस प्रकारको रहस्य म अबुझहरूलाई भन्न चाँहदिन। तिमी उसको स्थितिलाई अरू बिगार्दैछौ। मैले आफ्नो दवाईको परीक्षा गरिसकेकोछु। मौलविकलाई यही उपचारले लाभ भयो। मैले उसलाई राक्षस बनाइदिएँ। यसको प्रभाव उसलाई फोका उठन दिएको दवाई जस्तो भयो।

ग्रेगर्स : तब उ रोगीको बदली राक्षस भएको छ।

रेलिंग : भगवानले तिमीलाई भलो गरोस्। तिमी राक्षसको के अभिप्राय सम्झन्छौ। राक्षस हुने विश्वास पनि एक प्रकारको आशाको भ्रम हो। यसै विश्वासमा उसको जीवन बाँचेकोछ। यदि मैले राक्षसी प्रवृत्ति हुने भ्रम उत्पन्न नगरिदिएको भए उ पहिलेनै आत्म ग्लानी र निराशामा प्राण दिइसकने थिए। लेफ्टीनेन्टको पनि यही हाल छ तर बूढोले आफ्नो उपचार आफै गरे।

ग्रेगर्स : लेफ्टीनेन्ट एकदल साहवले के गरेको छ?

रेलिंग : अच्छा त तिम्रो के बिचार छ? भालूको शिकार गर्ने बूढो मानिस बुँइगलमा गएर खरायोलाई गोलीले हिर्काएर सन्तोक मान्छन्। बूढोलाई खरायो मारेर जो सफलता र सन्तोष अनुभव हुन्छ त्यो संसारका ठूला ठूला शिकारीहरूलाई पनि हुँदैन। बुँइगलमा उभेर चार पाँच बर्षदेखि क्रिसमस को त्यौहारमा होयदालको बनको ठूला ठूला बृक्ष नै हुन्। बुँइगलमा राखिएको कुखुरा पक्षीहरू बूढोको लागी पर्वतमा बसेको पक्षीहरू हुन्। बुँइगलमा उफ्ने खरायोहरू उसले जंगलमा घुमने शिकारनै सम्झन्छ जसको शिकार ल्याएको देवदारका सुखा काठहरू उसले जंगलमा गर्थ्यो।

ग्रेगर्स : बूढ़ोले वास्तवमा धेरै सहनु पर्‍यो। उसको यौवन अवस्थाको जम्मै आदर्शहरू भताभुंग भए।

रेलिंग : **मिस्टर ग्रेगर्स** हेर मेरो कुरा सुन। तिमी यो नयाँ विचित्र शब्द 'आदर्श' प्रयोग गर्दैछौ। सबैले जानेको सीधा-सादा शब्द भन–'प्रपंच'।

ग्रेगर्स : के तिम्रो बिचारमा आदर्श र प्रपंच एउटैकुरो हो?

रेलिंग : हो, त्यतिनै सम्झ जति ठूलो, दादुरा र सानो दादुरामा छ।

ग्रेगर्स : डाक्टर, हजलमारलाई मैले तिम्रो फन्दाबाट छुटाउनैपर्छ।

रेलिंग : यो उसको दुर्भाग्यनै हुनेछ। यदि मानिसको आशाको भंग भए उसको जीवनको सब उत्साहनै समाप्त हुन्छ। **(बैठकको दरवाजाबाट आँउदै गरेकी हेदविगलाई सम्बोधन गर्दै)** अहा! जंगली हाँसको आमा आई। अच्छा म तल गएर हेरौ, तिम्रा पापा आफ्नो चमत्कारिक आविष्कारको चिन्तामा अहिले पनि बसिरहेको छ। **(बाटोको दरवाजा बाट जान्छ)**

ग्रेगस : **(हेदविगपट्ट अघि बढेर)**–त्यो काम त अहिले पूरा भएको छैन। तिम्रो अनुहार हेरेर नै मलाई थाहा भयो।

हेदविग : कुन चाँही काम, त्यो जंगली हाँसको? होइन, अहिले भएको छैन।

ग्रेगर्स : मेरो अनुमान छ, तिमीले कोशिस गर्‍यौ होला तर साहस भएन।

हेदविग : होइन, त्यो कुरा होइन। आज विहान मेरो निद्रा खोलिने साथै तपाईको याद आयो तर मलाई त्यो कुरा ठीक लागेन।

ग्रेगर्स : ठीक लागेन?

हेदविग : ज्यू हो, हिज राती जब तपाईले भन्नु भो मलाई पूरा विश्वास भएको थियो। तर आज विहान सोचें मलाई ठीक लागेन।

ग्रेगर्स : हाँ, अब सम्झें, यो घरमा यत्रो दिन बसेकोले तिमी कमजोर भएको छौ।

हेदविग : होइन, यस्तो कुरो होइन। यदि त्यस कुराले पिताजी फर्क्यो भने।

ग्रेगर्स : यदि तिमीमा जीवनको सार्थकता चिन्ने दृष्टि भए, यदि तिमीमा आत्म समर्पणको–त्यागको भाव, वास्तविक साहस औ निर्भयता भए तिमी आफै बुझने थियौ कि तिमी आफ्नो पापालाई कुन प्रकारले बोलाउन सक्थ्यौ, तर हेदविग, मलाई अझ पनि विश्वास छ कि तिमीमा शक्ति छ।

*ग्रेगर्स बाटोको दरवाजाबाट जान्छ। हेदविग स्टुडियोको एक चक्कर लगाए भान्सा घरतिर जाँदा, बुँइगलको दरवाजामा*

*आवाज सुनिन्छ। हेदविग बुँइगलपट्टि गएर दरवाजा अलिकता खोल्छ। बूढो एकदल स्टुडियोमा आउँछ। हेदविगले बुँइगलको दरवाजा फेरि बन्द गर्छे।*

एकदल : हुँ, विहान घुम्न जाँदा एक्लै जानु मजा हुँदैन।

हेदविग : पिताजी आज कुनै शिकार गर्नुहुन्न?

एकदल : नानी, आज शिकारको मौसम छैन। हेर कहाँ कति अँधेरो छ। टाड़ोको कुरो हातभर पनि देखिन्दैन।

हेदविग : पिताजी, तपाई सँधै खरायोको शिकार गर्नुहुन्छ। अरु शिकार गर्ने इच्छा हुँदैन?

एकदल : किन, खरायोको शिकार नराम्रो छ?

हेदविग : नराम्रो त होइन तर जंगली हाँस…।

एकदल : हो हो हो, मैले तिम्रो जंगली हाँसलाई गोलीले मार्छ भन्ने डर लाग्यो? छोरा, यस्तो कहिले हुन सक्तैन, यस्तो कहिले गर्दिन।

हेदविग : गर्न सक्नु हुन्न? जंगली हाँसलाई गोली मार्नु बहुत कठिन छ?

एकदल : कठिन हुन्छ? मेरो त विचार छ, म मार्न सक्छु।

हेदविग : पिताजी, कसरी गोली मार्नु हुन्छ? मेरो हाँसको होइन, अरुको कुरा गर्दैछु।

एकदल : हेर, जंगली हाँसको शिकार गर्नुछ भने सँधै उसको छातीमा निशाना लाउनुपर्छ। तब उ बाँच्न सक्तैन। यो पनि ध्यान राख कि पक्षीलाई गोलीले हिर्काउँदा परवेटाको उल्टापट्टि, पखेटापट्टि होइन, निशाना लाउनुपर्छ।

हेदविग : पिताजी, तब जंगली हाँस मर्छ?

एकदल : निश्चय, यदि निशाना ठीक लागे, निश्चय मर्छ। अच्छा, म गएर लुगा लगाँऊ, तिमी बुझछौ होइनौ?

*बूढो आफ्नो कमरामा जान्छ। हेदविग एक छिन सोचेर बूढोको कमराको दरवाजा पहि हेर्छे औ पुस्तकको आलमारीको छेउमा गएर उठेर पिस्तोल उठाउँछे औ ध्यानपूर्वक हेर्छे। गीना बैठकको दरवाजामा आउँछे। उसको हातमा झाडु र झाड़न छ। हेदविगले झटपट पिस्तोल आलमारीमा राख्छे। गीनाले देख्दैन।*

गीना : हेदविग, के गर्दैछौ? पापाको चीजहरू नचलाउनु।

हेदविग : (**पुस्तकको आलमारीबाट पर हट्छ**)—आमा म त चीजहरू मिलाउँदै थिएँ।

गीना : तिमी भान्साघरमा गएर हेरन, कफीको मुनि आगो ठीक छ। तल

झरे तिम्रो पापाको लागी कफी लिएर जान्छु।

*हेदविग जान्छे। गीना स्टुडियोमा सफा गर्न लाग्छे। केही क्षणपछि बाटोको दरवाजा खोलिन्छ। औ हजलमार स्टुडियो तर्फ हेर्छ। हजलमारले ओवरकोट लाएकोछ तर शिरमा टोपी छैन। अनुहारमा दाही बढ़ेको छ। शिरको केश लत्रिएको औ अस्त व्यस्त छ। आँखा मधुरो औ गहीँ छ। गीना हातमा झाडु लिएरं निश्चल उभिरहन्छे।*

गीना : आऊ, आखिर फर्क्यौ त।

हजलमार : **(स्टुडियोमा आउँछ औ मधुरो आवाजमा बोल्छ)**—होइन, म अहिले जान्छु।

गीना : अच्छा अच्छा, हुन्छ तर केही ख्याल राख, कस्तो अनुहार बनाएको छौ?

हजलमार : कस्तो अनुहार बनाएँ?

गीना : ओवरकोट त हेर, कोटको के दशा बनाएकोछौ?

हेदविग : **(भान्सा घरको दरवाजाबाट हेर्छे)**—आमा! **(पितालाई देखेर प्रसन्नताले चिच्चाउँछ)**—पापा! पापा!!

हजलमार : **(छोरीलाई तिरस्कारको भावनाले हेर्छर पर बस्ने संकेत गर्दै)** यहाँ न आऊ। **(गीनालाई सम्बोधन गर्दै)**—गर्दैछु, उसलाई हटाऊ।

गीना : **(स्वर दबाएर)**—हेदविग, तिमी बैठकमा जाऊ। **(हेदविग शिर झुकाएर जान्छे)**

हजलमार : **(हतारले मेजको दराज खोल्दै)**—म आफ्नो पुस्तक लिन आएको। मेरो पुस्तकहरू कहाँ छ?

गीना : कुन पुस्तक?

हजलमार : मेरो वैज्ञानिक पुस्तक औ मेरा वैज्ञानिक पत्रिकाहरू, जुन आविष्कार को खोजको लागी पढ़नु जरूरी छ।

गीना : **(आलमारीमा हेर्दै)**—यो बिना जिल्दको?

हजलमार : हो, त्यही।

गीना : **(टेबलमा पत्रिकाहरू थुपारी दिन्छे)** हेदविगलाई भनुँ, यो सबै मिलाईदिनुलाई। नयाँ पत्रिकाको पन्ना काटि दिऊँ।

हजलमार : होइन, पन्ना काटन केही जरूरत छैन। **(मौन भएर उभिन्छ)**

गीना : त निश्चय गर्‍यौ हामीलाई छोड़न?

हजलमार : **(पुस्तकहरू छाँटदै)** तिम्री जान्दैनौ? यसमा भन्ने के कुरा छ।

गीना : हुँ···।

हजलमार : **(खिन्नतासित्त)** मेरो लागी सह्य छैन। यहाँ बसेर हर समय हृदयमा

शूलको वेदना सही रहौं?

गीना : तिमी कस्तो कुरा गर्दैछु! यसको लागी भगवानले तिमीलाई क्षमा गरोस्।

हजलमार : तिमीले मसित अन्याय गरेनौ?

गीना : अन्याय त तिमी गर्दैछौ।

हजलमार : तिमीले के के गस्यौ? मानिसको केही कर्त्तव्य पनि हुन्छ। मानव जीवनको आदर्शप्रति पनि केही कर्त्तव्य सम्झनुपर्छ।

गीना : तर पिताजीको के हुन्छ? यस बुढापामा उसको के हुन्छ?

हजलमार : आफ्नो उत्तरदायित्व मलाई थाहा छ। आफ्नो असहाय अवस्थामा पिताजी मेरोमा नआएर अरू कसकोमा जान सक्छ। म शहरमा अर्को प्रबन्ध गर्छु। हँ, बाटोमा कसैले मेरो टोपी पाएन?

गीना : किन, टोपी हरायौ?

हजलमार : हो, हरायो! हिज राती म फर्कन्दा जरूर पनि टोपी मेरो शिरमा थियो। तर विहान देखि पाउँदिन।

गीना : हाय राम, राती दुइ लफंगाहरूसित कहाँ कहाँ घुमी बस्यौ?

हजलमार : उटपटाङ कुरा नगर, यस्तो मानसिक अवस्थामा ती सब कुराहरू कसरी याद रहन्छ?

गीना : राती सर्दी त लागेन- (भान्सा घरमा जान्छे)

हजलमार : **(टेबलको दराजबाट चीजहरू निकालेर टेबलमा राख्दै बरबड़ाउँछ)**—रेलिंग एकदमै गुण्डा हो। पक्का बदमाश! निर्लज्ज, अरूलाई कसरी बहकाउँछ—उसको ज्यान लिन्छु।

*केही पुरानो पत्रहरू एकपट्टि राख्छ। उसको ध्यान हिज बेलुकी च्यातेको पत्रतर्फ जान्छ। पत्रका टुक्राहरू, उठाएर हेर्छ, फेरि राख्छ। गीना भान्सा घरबाट आउँछे।*

गीना : **(टेबलमा सानो ट्रेमा खाजा राख्छे)** इच्छा भए यो गरम खाऊ। एउटा टुक्रामा मखन लगाएकोछु। अलिक नुन लगाएको मासु पनि छ।

हजलमार : **(ट्रेमा राखेको खाजा हेर्दै)** नुन हालेको मासु! मलाई यो घरको केही चीज चाहिन्दैन। पुरा दिन र रात चौविश घण्टा भो मैले एक दाना पनि मुखमा हालेको छुइन, तर पर्वाह छैन। मेरो कागज कहाँ छ? शुरूमा मैले जो नोट लेखेको थिएँ मेरो डायरी र जरूरी कागज कहाँ उड़ेर गयो? **(बैठकको दरवाजा खोलेर हेर्छ, तर पछि हटेर तुरन्तै बन्द गर्छ)** उ फेरि यहाँ बसेकी छ।

गीना : छोरी हो, कहीं त बस्छे।

हजलमार : बाहिर आऊ (**हजलमार दरवाजा खोलेर हेदविगलाई नछुनुको लागी एकापट्टी सर्छ हेदविग डरले चुपचाप स्टुडियोमा** आउँछ) म दुइचार मिनटको लागी पुरानो घरमा आएकोछु। जसको यो घरसित केही सम्बन्ध छैन, उनीहरू मलाई किन दुःख दिन्छन्। (**बैठकमा जान्छ।**)

हेदविग : (**लामो पाइला उठाएर आमातर्फ जान्छे औ काम्दै धीमा स्वरमा सोच्छे**) के मलाई भनेको।

गीना : छोरी! तिमी भान्सा घरमा जाऊ, राम्रो होइन, आफ्नो कोठामा जाऊ। (**हजलमार पट्टि फर्केर** भन्छे)—एक छिन पर्ख, म सबै कुरो निकालीदिन्छु।

हेदविग : (**भयभीत, झिझट मानेर केही बेर निश्चल र मौन बस्छे। दाँतले ओठँ टोक्दै आँसु रोक्छे। हातको मुटकी बाँध्छे औ ओठ ओठमें धीमा स्वरमा बोल्छे**)—जंगली हाँस··· (**आलमारीको नजिकमा गएर माथिबाट पिस्तोल** उठाउँछे। **र विस्तारसित बुँइगलको दरवाजा खोल्छे र फेरि बन्द** गर्छे।) बैठकमा हजलमार र गीना झगड़ा परेको आवाज सुनिन्छ। हजलमार बैठकबाट केही कापीहरू र कागज लिएर निस्कन्छ। औ सबै कुरो टेबलमा राखिदिन्छ।)

हजलमार : यी सब चीजहरू त्यो सूटकेसमा कसरी आटँछ। सैकड़ौं चीज छ, मलाई चाहिने।

गीना : (**सूटकेस लिएर हजलमारको पछि बैठकबाट आउँछे**) अच्छा, ती चीजहरू पछि लैजाऊ। अहिले एउटा कमेज, जंगिया र बन्यान राख।

हजलमार : ओह, सब चीजहरू मिलाउनु बाँध्नु कति साह्रो छ। (**ओवरकोट उतारेर सोफामा फयाँकी दिन्छ।**)

गीना : तिम्रो कफी त्यसै ठण्डा भइ सक्यो।

हजलमार : हुँ (**केही सोचेर कफीको एक घुटको पिउँछ औ फेरि अर्को घुटको**)

गीना : (**झाड़नले चौकीहरू पुछदै**)—खरायो राख्नलाई यति ठूलो बुँइगल धेरै मुश्किलले पाउँछ। खोज्नु धेरै घुम्नुपर्छ।

हजलमार : के यो खरायो पनि म लान्छु।

गीना : हो, पिताजी खरायो बाहेक बस्न सक्दैन।

हजलमार : बस्नैपर्छ। खरायो के हो, म उसको लागी ठूल्ठूला चीजहरू छोड़ेर जाँदैछु।

गीना : (**आलमारी पुछदै**)—भन्छौ भने तिम्रो बाँसुरी पनि **सूटकेसमा**

हालिदिन्छु!

हजलमार : होइन, मलाई बाँसुरीको जरूरत छैन! हो, पिस्तोल राख!

गीना : के बन्दुक साथमा लिएर जान्छौ?

हजलमार : हो, मेरो पिस्तोल, याद गर्नु, गोली हालेकोछ। त्यसलाई सूटकेसमा राख।

गीना : **(अलमारी माथि हेरेर)**—यहाँ त छैन! पिताजीले लगेको होला।

हजलमार : के बुँइगलमा गएको थियो!

गीना : अरू कहाँ जान्छ।

हजलमार : हो, विचारा काम बेगर बसेर समय विताउनु पनि कठिन पर्छ।

*मखन लगाएको रोटीको टुक्रा चपाउनु थाल्छ औ प्यालाको कफीको शेष घुटको पिउँछ।*

गीना : कमरा किरायमा नदिएको भए तिमी त्यसैमा बस्न सकने थियौ।

हजलमार : किन त्यो अर्कै जगह हो? यो घरमा, कहिले पनि, म कुनै पनि हालतमा वस्न सक्तिन।

गीना : चाहन्छौ भने दुइचार दिनको लागी बैठकमा बस। त्यहाँ कोही जाँदैन।

हजलमार : होइन, होइन, यो घरमा कुनै हालतमा पनि होइन।

गीना : अच्छा, तल डाक्टर र पादरीसित बस।

हजलमार : तिमी मेरो सामने उनीहरूको कुरा नगर। मलाई उनीहरूको नाम सुन्न साथ घृणा हुन्छ। यो सब हुँदैन, म आफ्नो बाटो खोज्छु। आँधी-पानीमा पनि भटकिएर पिताजी औ मेरो शरण खोज्छु।

गीना : सोच त तिम्रो टोपी पनि हरायो। औ हिऊँ पनि पर्दैछ।

हजलमार : ओ हो, त्यो मैलाको कीरा औ बेइमान। म टोपीको बन्दोबस्त जसरी भए पनि गर्छु। **(मखन लगाएको रोटीको टुक्रा टुक्रा उठाएर खान्छ)** मलाई आफ्नो निर्वाहको प्रबन्ध गर्ने पर्छ। त्यसै त ज्यान दिदिन।

*टेबलमा राखेको ट्रेमा हेर्छ।*

गीना : के चाहिन्छ?

हजलमार : मखन छैन?

गीना : अहिले त्याउँछु। एक सेकेण्डमा **(भान्सा घरमा जान्छे)**

हजलमार : **(गीनालाई बोलाउँछ)**—ओहो, होस, कुनै जरूरत छैन **(मेरो लागी सुखा रोटी कफी छ।)**

गीना : **(मखनको प्याला लिएर फर्कन्छे)** यो एकदमै ताजा, विहानमात्र निकालेको हो।

*गीना हजलमारको लागी अरू एक प्याला कफी तयार गर्छे। हजलमार सोफामा वस्छ। रोटीको एक टुक्रामा मखन लगाएर खान थाल्छ। चुपचाप कफी पिउँछ।*

हजलमार : म सोच्दै छु एक दुइ दिन बैठकमै वसे अरूलाई बैठकमा दखल दिन केही आवश्यकता पर्दैन।

गीना : जरूर वस्न सक्छौ। यो त तिम्रो इच्छामा निर्भर गर्छ।

हजलमार : कारण यो हो पिताजीको सब सामान एकदमै उठाएर लानु सम्भव छैन।

गीना : हो, पहिले पिताजीलाई यो पनि बताउनुपर्छ कि तिमी हामीलाई छोड़ेर जाँदैछौ, यहाँ वस्दैनौ।

हजलमार : (कफीको प्याला पर सारेर) हो, त्यो त अर्कै कुरा हो। मैले त यी सबै समस्याहरूको नयाँ प्रकारले सुलझाउनु पर्छ, पूरा परिस्थितिलाई बिचार्नुपर्छ। आराम को लागी समय चाहिन्छ। यी सबै कुराहरू एकै दिनमा हुनसक्दैन।

गीना : हो हो, औ मौसम पनि त खराब छ।

हजलमार : **(टेबलमा राखिएको वर्ल साहब को पत्र उलटाइ पल्टाइ हेर्छ)**—अच्छा यो पत्र अहिले सम्म यही छ?

गीना : मैले त देखेको पनि छैन।

हजलमार : मलाई यो झगड़ासित के मतलब?

गीना : हो, हामीलाई यो के गर्नु?

हजलमार : तर उसलाई हराउनु पनि त राम्रो होइन। मेरो सामान निकाल्दा, उल्टा-पुल्टा हुँदा हराउनु पनि त सक्छ।

गीना : हुन्छ, म यसलाई सम्हालेर राख्छु।

हजलमार : यो दानपत्र हो। यसमा पहिलो अधिकार त पिताजी को छ। यस विषय जो निर्णय गर्नुछ पिताजीलेनै गर्न सक्छन्।

गीना : **(गहिरो सास लिएर)**—हो उनै विचाराकले गर्नुपर्छ।

हजलमार : यो पत्रको टुक्रा हराउनु हुँदैन, अलिकता गम छ, म यसलाई जोड़ी दिऊँ?

गीना : **(आलमारीपट्टि जान्छ)**—यो हो गम।

हजलमार : सानो ब्रुस छ?

गीना : ब्रुस पनि छ **(गमको भाँड़ र ब्रुस हजलमारलाई दिन्छे)**

हजलमार : **(उठेर आलमारीवाट कैंची लिन्छ)** यसको पछि एक टुक्रा कागज

लगाएर जोड़ी दिऊँ।

*कागजको मसिनो टुक्रा काटेर पत्रमा टाँसी दिन्छ।*

अरूको पैसासित मेरो के लेनदेन। विचारा असहाय बूढ़ोको धनमा म किन हात लगाऊँ। कसैको धन सम्पत्तिसित मेरो के मतलब। आफूलाई के छः बसी रहोस्, सुक्छ। सुकेपछि उठाएर राख्नु। मलाई यो सित के मतलब! मलाई केही छैन।

*बाटोको दरवाजाबाट ग्रेगर्स स्टूडियोमा आउँछ*

ग्रेगर्स : **(छक्क परेर)** अरे, हजलमार तिमी यहाँ?

हजलमार : **(झट्ट उठेर खड़ा हुन्छ)** थकावट र चिन्ताले मेरो मन डुब्न लागेको थियो।

ग्रेगर्स : अच्छा, खाजा खायौ?

हजलमार : शरीर अन्न बिना चल्न सक्दैन।

ग्रेगर्स : तिमीले के निश्चय गर्‍यौ?

हजलमार : म जस्तो व्यक्तिको लागी केवल एउटैकुरो हुनसदछ। म आफ्नो खास चीजहरू सम्हाल्देछु। अलिक समय लाग्छ, तिमीलाई थाहा छ।

गीना : **(खिन्नताले पतिलाई सम्बोधन गर्दै)** बताऊ, तिम्रो लागी कमरा ठीक गरौ वा तिम्रो सामानहरू सुटकेसमा राख्नुपर्छ?

हजलमार : **(ग्रेगर्सको उपस्थितिमा चिन्ता व्यक्त गर्दै)** सूटकेसमा सामान राख्दैछौ औ कमरा पनि ठीक गर्दैछौ?

ग्रेगर्स : **(केही सोचेर)** मलाई यस, कुराको अलिकति पनि अनुमान थिएन कि हाम्रो कुराको यो पिरणाम हुन्छ। म विलकुल बुझन सक्तिन कि तिमीलाई घर छोड़ेर जाने के आवश्यकता छ।

हजलमार : **(उदिग्नतासित ओहोर दोहोर गर्न लाग्छ)** तिमी नै बताऊ, म के गरूँ। ग्रेगर्स, मनमा यस्तो बोझ लिएर बस्नु मलाई सम्भव छैन। म निरन्तर मानसिक क्लेशमा रहन सक्तिन। मलाई आफ्नो कामको लागी मानसिक शान्ति र सुविधाको आवश्यक छ।

ग्रेगर्स : मानसिक शान्ति र सुविधा यहाँ तिमीलेकिन पाउन सक्तैनौ? कोशिस गरेर हेर। म सम्झन्छु कि तिमीले अधिक भन्दा ठोस आधारमा नयाँ जीवन शुरू गर्न सक्छौ। यो पनि सोच तिमीले आविष्कारलाई जीवन को लक्ष्य मानेको छौ।

हजलमार : उफ्, तिमी त्यस आविष्कारको कुरा नगर। त्यो कुरो धेरै टाड़ो पुगी सकेकोछ।

ग्रेगर्स : यस्तो के कुरा छ?

हजलमार : भगवाननै जान्दछ तिमीनै बताऊ। म के आविष्कार गरौं। मानिसहरूले सबै कुरा गरी सके, अब नयाँ आविष्कार के रहेकोछ?

ग्रेगर्स : तर तिमीले त्यसको लागी कति परिश्रम गरेको छौ।

हजलमार : यो सब बदमास रेलिंगको खेल हो, उसैले मलाई यो मूर्खतामा फँसाएको हो।

ग्रेगर्स : डॉ. रेलिंगले!

हजलमार : हो, उसैले भन्यो, म प्रतिभावान छु भनेर। म फोटोग्राफीमा नयाँ महत्त्वपूर्ण आविष्कार गर्न सक्छु,।

ग्रेगर्स : अच्छा रेलिंगले?

हजलमार : म त्यो सुख सपनामा डुँबे। आविष्कार गर्न सक्ने सपना भन्दा अधिक मलाई हेदविगको विश्वासमा थियो। मैले सम्झेको थिएँ कि निर्दोष सरल छोरीलाई पूरा विश्वास छ कि म ठूलो आविष्कार गर्दैछु। तर मेरा मूर्खताले छोरीलाई मैले यत्रो निर्दोष र सरल सम्झें।

ग्रेगर्स : यो तिमी कसरी भन्न सक्छौ कि हेदविगको त्यस कुरामा साँचैनै विश्वास थिएन।

हजलमार : सब कुरो हुन सक्छ। अब मलाई कुनै पनि कुरोमा विश्वास छैन। त्यही छोरीको कारणलेनै सब झगड़ा भएको हो। उसले मेरो जीवनको सब कुरो समाप्त गरिदियो।

ग्रेगर्स : हेदविगले? हेदविग विषय तिमी कस्तो कुरा गर्दैछौ? विचारी हेदविगले के गरी दिई?

हजलमार : **(ग्रेगर्सको कुरालाई ध्यान नदिइ)** म भन्न सक्तिन, म उसलाई कति माया गर्छु। म भन्न सक्तिन कि जब पनि म बाहिरबाट घर आँउथो छोरी खुशीले ठूल्ठूला आँखा पार्दै दौड़ेर आएर मसित टाँसिन्थे तब मलाई कत्रो आनन्द अनुभव हुन्थयो, म खुशीले गद्गद हुन्थे। म विश्वासमा अन्धा भएको थिएँ। म त्यस केटीको स्नेहमा आँखा बन्द गरेर भ्रममा थिएँ कि उसले पनि माया गर्छे।

ग्रेगर्स : तिमीले यो कसरी सम्झ्यो कि थी भ्रम थियो?

हजलमार : कसरी बुझ्न सक्छु? गीनाबाट सत्य कुरो जान्न सकिन्दैन। आदर्श कर्तव्य जस्ता उँचा भावनासित उसको केही सम्पर्क छैन। ग्रेगर्स तिमी बाहेक औ उसको अघि आफ्नो सन्देहको बेदना प्रगट गर्न सक्छु। सब भन्दा ठूलो सन्देह त यो हो कि हेनविगले मलाई कहिले पनि साँचो माया गरीन।

ग्रेगर्स : यस सन्देहको लागी कुनै कारण वा प्रमाण त हुनुपर्छ। (**ध्यानले सुन्दै**), छ, केही, के जँगली हाँस चिच्याउँदैछ?

हजलमार : जंगली हाँस बोल्दै छ होला। पिताजी बुँइगलमा हुनुहुन्छ।

ग्रेगर्स : पिताजी बुइँगलमा हुनुहुन्छ? (**ग्रेगर्सको अनुहारमा प्रसन्नता छाउँछ**), सुन, हुनसक्छ तिमीले प्रमाण पाउँछौ कि हेदविग प्रति तिमीमा भएको सन्देह निराधार छ। तिमीलाई उसले साँच्चैने माया गर्छे।

हजलमार : उसले के प्रमाण दिनसक्छ? म उनीहरूको कुनै कुरोमा पनि विश्वास गर्न सक्तिन।

ग्रेगस : हेदविंगको हृदयमा छल हुनै सक्तैन।

हजलमार : ग्रेगर्स, यही कुरोमा त सबै भन्दा ठूलो सन्देह छ। कसले जान्दछ, गीना त त्यो श्रीमती सूरबी ले केटीको कानमा के के भनि राखेकीछन्। अनि यो पनि म जान्दछु कि केटी धेरै गहिरो छे। कसलाई थाहा छ यो दानपत्रको उद्देश्य के हो? अचानक आफै आए। यसको लागी के के साँठ-गाँठ गरिएको होला? मलाई त केही सन्देह लागेको थियो।

ग्रेगर्स : यो तिमी कस्तो कुरा गर्दैछौ? बड़ो विचित्र भावना छ तिम्रो।

हजलमार : अब मेरो आँखा खोलिएकोछ। तिमी हेर मामला दानपत्रसम्म मात्र रहँदैन। हेदविंग माथि सूरबी महोदयाको दया सँधैने रही आएकोछ। अब उसको हातमा मौका छ। केटीको लागी जे पनि गर्न सक्छ। जब चाहन्छ, केटीलाई यहाँबाट लैजान पनि सक्छ।

ग्रेगर्स : हेदविग तिमीलाई छोड़ेर जाँदैन।

हजलमार : तिमी यी कुराहरू रहनदेऊ। उसकोमा के कमी छ। जब इच्छा हुन्द, लोभ्याउन सक्छ, लोभमा फसाँएर इशाराले बोलाउन सक्छ। बताउन सक्तिन म उसलाई कति माया गर्थे। मैले निश्चय गरेको थिएँ कि म उसको जीवन भर हेर्चहि गर्छु, उसको अँध्यारो जीवन मार्गमा सँधै साथ दिनैछु। मेरो लागी उ सँधै अँधेरोबाट आतंकित कारवको बच्चानै बनेर बसी। तर आज मेरो आँखा खोलियो और मेरो हृदय बेदनाले फाटिन लागेकोछ। यो गरीबको घर र गरीव फोटोग्राफर उसको लागी के हो। उ त यहाँ खाली दिन काटदैछे। बड़ो चलाकी र चतुरताले मलाई मूर्ख बनाँउदै आएकी थिइ।

ग्रेगर्स : होइन, होइन, स्वयं तिम्रो हृदय पनि यो मान्न सक्तैन।

हजलमार : यही त सबै भन्दा ठूलो समस्या छ। म आफै जान्दिन के मानौ। जान्ने केही उपाय पनि छैन, तर तिमी बताऊ, मेरो कुरामा के

सन्देह छ। हा हा हा **(हाँस्ने कोशिस गर्छ)** मेरो भाई, तिमी मानव-आदर्शको कर्तव्यको पूर्तिको विचारमा के के सोच्छौ। अरू मानिसहरू केटीलाई सुख शान्तिको प्रलोभन दिएर भन्छन् उसलाई छोड़। यहाँ के छ? यहाँ आएर सुख अनि ऐश्वर्यको जीवन हेर!

ग्रेगर्स : **(हतारिएर)** अच्छा त तिम्रो के बिचार छ?

हजलमार : तिमी सम्झन्छौ म केटीलाई केही भनुँ, हेदविग, तिमीलाई उनीहरूले सब सुख र ऐश्वर्य दिँदैछन् तर तिमी ती सब मेरो लागी त्याग्न सक्छौ। **(अन्योलमा हाँस्छ)**, यस्तो सल्लाहको लागी धन्यवाद! तिमी पनि जान्दछौ, म के उत्तर पाउँछु। **(बुँइगलमा पिस्तोल चलेको आवाज सुनिन्छ)**

ग्रेगर्स : **(अत्यन्त खुशी भएर)** हजलमार, के गर्दैछौ?

हजलमार : **(बुँइगल पट्टि संकेत गर्दै)** तिमीले सुन्यौ, पिताजी यो समय पनि शिकार बिना बस्न सक्दैन।

गीना : **(भान्सा घरबाट निस्केर)** बुँइगलमा गएर हेर, पिताजीले केही उपद्रव त गरेन?

हजलमार : अहिले हेर्छु।

ग्रेगर्स : **(भावुकताले भरिएको स्वरमा)** एक छिन पर्ख! यो आवाज के हो?

हजलमार : हो हो जान्दछु।

ग्रेगर्स : होइन, तिमी जान्दैनौ, म जान्दछु, तिमीले प्रमाण खोजेको होइन, पायौ?

हजलमार : के चीजको प्रमाण?

ग्रेगर्स : यो केटीको त्याग हो, उसले आफ्नो बाजेलाई भनेर जंगली हाँसलाई गोली मार्न लगायो।

हजलमार : जंगली हाँसलाई गोलीले मार्न लगायो?

गीना : हो !.यो के?

हजलमार : तर किन!

ग्रेगर्स : छोरीले तिम्रो लागी त्याग गरी। उसले तिमीलाई पाउन आफ्नो सबैभन्दा बहुमूल्य औ प्यारो बस्तुलाई त्यागी दिई। उसलाई विश्वास थियो कि उसले यो त्याग गरे तिमी फेरि उसलाई माया गर्न लाग्छौ।

हजलमार : **(भावुकताले द्रवित स्वरमा)**, विचारी केटी!

गीना : जान्देन, के के सोच्छे उसले।

ग्रेगर्स : हजलमार, उ तिम्रो मायाको भूखाथिई। तिम्रो स्नेह बिना जीवन सम्भव छैन भन्ने सोच्थी।

गीना : **(आँखामा आँसु रोकेर हजलमारलाई हेर्दै)** देख्यौ?

हजलमार : **(गीनापट्टि हेर्दै)** हेदविग कहाँ छ?

गीना : **(आँसु पुछेर)** के थाहा, सायद भान्सा घरमा बसिरहेकी होली।

हजलमार : **(भान्साघरमा गएर दरवाजा खोल्दै बोलाँउछ)** हेदविग, यहाँ आऊ **(भान्सा घरमा हेर्छ)** होइन, यहाँ त छैन।

गीना : तब आफ्नो सानो कमरामा लुकेर बसेकी होली।

हजलमार : **(भन्सा घरबाट गएर सानो कमरामा हेर्दै)** छैन, यहाँ पनि छैन। कमराबाट निस्केर घुम्न बाहिर कतै गएकी हुनुपर्छ।

गीना : त के गरोस! तिमीले उसलाई घरमा कहीं बस्न दिएनौ।

हजलमार : कहिले फर्कन्छे ! आएपछि म उसलाई भनुँ। ग्रेगर्स, तिमी चिन्ता नगर, सबै ठीक छ। म आफ्नो जीवन फेरि आरम्भ गर्नेछु।

ग्रेगर्स : **(गम्भीरतासित)** मलाई पहिलेनै विश्वास थियो कि छोरीको सरल हृदयलेनै तिम्रो जीवन पवित्र बनाउन सक्छ। **(बूढो एकदल आफ्नो कमराको दरवाजामा देखापर्छ। पूरा वर्दी लगाएकोछ और पेटीमा तलवार बाँधेकोछ)**

हजलमार : **(छक्क परेर)** पिताजी, तपाई यहाँ?

गीना : **(बूढोपट्टि हेरेर)** गोली तपाईले आफ्नो कमरामा चलाउनु भयो?

एकदल : **(प्रश्नसित खिन्न भएर)** हजलमार, तिमी एक्लै शिकार खेल्दैछौ?

हजलमार : **(चिन्तित भएर आत्तिन्दै)** तब त्यो गोली तपाईले चलाउनु भएन।

एकदल : मैले गोली चलाएँ? हँ!

ग्रेगर्स : **(हजलमारलाई सम्बोधन गर्दै)** देख्यौ तिमीले! छोरी आफैले जंगली हाँसलाई गोली मार्‍यो।

हजलमार : के भन्दैछौ तिमी **(चाँडो बुँइगलपट्टि गएर दरवाजा झट्ट खोल्छ। बुँइगलमा हेरेर उ चिच्याउँछ)** हेदविग!

गीना : **(बुँइगलको दरवाजापट्टि दौड्न्छे)** हेदविग, के भयो?

हजलमार : **(बुँइगलमा जाँदै)** लड़ेकी थिइ।

ग्रेगर्स : हेदविग लड़ेकी छ **(हजलमार पट्टि जान्छ)**

गीना : **(बुँइगलमा आत्तिन्दै जान्छे)** हेदविग हाय! के भयो, हाय राम के भयो!

एकदल : वाह! वाह1! केटी पनि शिकार खेल्न थाली। **(हजलमार, गीना र ग्रेगर्स भएर हेदविगलाई उठाएर स्टुडियोमा ल्याँउछ। हेदविगको दाहिने हात झुण्डिएकोछ औ हातमा पिस्तोल बलियोसित समातेको छ।)**

हजलमार : **(ब्याकुलतासित)** केटीको हातबात पिस्तोल चल्यो, चोट लागेकोछ, छिटो डॉक्टर बोलाऊ, छिटो।

गीना : **(दौड़ेरबाटोपट्टि जान्छ र बोलाँउछे)** डाक्टर साहब! रेलिंग साहब, छिटो, कुदेर आउनोस्। **(हजलमार र ग्रेगर्सले हेदविगलाई सोफामा सुताँउछ)**

एकदल : **(गम्भीरतासित)** बन आफ्नो बदला आफै लिन्छ!

हजलमार : **(घुँड़ा टेकेर सोफाको छेउमा बस्छ)** यसलाई होश आँउदैछ, आउँदैछ, हो हो आउँदैछ!

गीना : **(बाटोको दरवाजाबाट फर्केर)** चोट कहाँ लागेको छ। मैले त कहीं पनि देखिन।

*रेलिंग झटपट आँउछ। उसको पछि मौलविक पनि आँउछ। उसको शरीरमा कोट र गलामा नेकटाई छैन*

रेलिंग : किन, के भयो?

गीना : भन्दैछ हेदविगलाई गोली लागेकोछ।

हजलमार : यहाँ आऊँ , हेरेर सम्हाल।

रेलिंग : गोली हानी दियो?

*टेबललाई धक्काले हटाएर सोफाको नजिक आउँछ। परीक्षा गर्न झुक्छ।*

हजलमार : **(चिन्तित भएर रेलिंगलाई हेर्दै)** डॉक्टर कुनै खतरा त छैन। अलिकतिमात्रै खून निस्कोकोछ, डरको त केही कुरा छैन होइन।

रेलिंग : यो कसरी भयो?

हजलमार : मलाई त केही थाहा छैन।

गीना : जंगली हाँसलाई गोलीले हिर्काउन चाहन्थी।

रेलिंग : जंगली हाँसलाई?

हजलमार : पिस्तोल आफै चल्यो होला!

रेलिंग : हो, सम्भवतः।

एकदल : बन आफ्नो बदला लिन्छ तर मलाई केही डर छैन। **(बूढ़ो बुँइगलमा गएर दरवाजा बन्द गर्छ )**

हजलमार : डॉक्टर, तिमी किन भन्दैनौ?

रेलिंग : गोली छातीमा लागेको छ।

हजलमार : तर यसको होश त आँउदैछ!

गीना : (रूँदै) मेरी छोरी, हाय मेरी छोरी!

ग्रेगर्स : **(रूँचे स्वरमा)** अथाह सागरको गहिराईमा।

हजलमार : **(सहसा उभिन्छ)** होइन, मेरी छोरी मर्न सक्तैन। डाक्टर भगवानको लागी बचाऊ। एक मिनटको लागी बचाईदेऊ। म उसलाई बताऊँ, म उसलाइ कति माया गर्छु। सँधै माया गरी रहनेछु।

रेलिंग : गोली छातीमा लागेकोछ। खून पेटभित्र पसेको छ। प्राण त्यति बेलै निस्केको हुनुपर्छ।

हजलमार : हाय। मैले उसलाई मवाट पर सारें । विचरा डराएर बुँइगलमा गई। हाय विचरीले मेरो मायाको लागी प्राण दिई। **(हिक हिक गर्दै रून्छ)** मेरो यो पाप कहिल्यै छुट्दैन। हाय, म उसलाई कहिले पनि बताउन सक्दिन **(दुवै हात मुट्ठी पारेर आकाश पट्टि उठाँउछ)**। हे भगवान, यदि कोही भगवान छ भने मलाई बताऊँ! मसित यस्तो किन गर्‍यौ ?

गीना : **(हिक हिक गर्दै)** चुप लाग, चुप लाग, यस्तो कुरा नगर। म जान्दछु, हामी उसलाई राख्ने योग्यको थिएनौं।

मौलविक : छोरी जीवित छ, उ निद्रामा छे।

रेलिंग : किन व्यर्थैमा बक्दैछौ ?

हजलमार : **(आफूलाई सम्हाल्दै दुवै हाल छातीमा राखों सोफाको नजिकमा आएर शिर झुकाएर हेदविग पट्टि हेर्छ)** : तिमी सँधैको लागी मौन र निश्चल भयौ।

रेलिंग : **(केटीको हातबाट पिस्तोल छुट्याउने प्रयत्न गर्दै)** हेर, कति जोड़ले, कलि बलियोसित पक्रेकी छ।

गीना : छोड़ी दिनोस् डाक्टर साहब, छोड़ी दिलु होस। औंलीहरू दुख्छ, यस्तै रहन दिनोस्।

हजलमार : पिस्तोलसितै जान देऊ।

गीना : हो, रहोस्! छोरी यहाँ सबैको अघि कसरी पड़िरहन्छ। उसकै कमरामा लानुपर्छ। **(हजलमारलाई सम्वोधन गर्दै)** आऊ। उठाएर मसित हिड़ँ! **(हजलमार र गीना भएर हेदविगलाई उठाँउछ)**

हजलमार : **(गीनासित छोरीलाई उठाँउँदै)** गीना, हाय गीना! यो चोट कसरी सहनु?

गीना : सहनै पर्छ। एक अर्काको सहारामा सहन्छौं। हामीहरू आफैले गर्नुपर्छ।

मौलविक : (आशीर्वादको मुद्रामा हेदविग माथिहात राखेर ओँठ बरबराँउछ। भगवान, तिम्रो दया अपार छ! पृथ्वीको अंश पृथ्वीमा, माटो, माटोमा।

रेलिंग : (**पादरीपट्टि झुकेर दविएको स्वरमा**) चुप बस मूर्ख, नशामा छौ? (**हजलमार र गीना छोरीलाई उठाए र भान्सा घरबाट लान्छ। रेलिंग उपट्टि हेरी रहन्छ। मौलविक बाटोको दरवाजाबाट भाग्छ।**)

रेलिंग : (**ग्रेगर्सको छेउमा जान्छ। ग्रेगर्सको अनुहारमा आतंक छाएकोछ। दाँत किटेर उभिएकोछ। रेलिंग उसलाई सम्बोधन गर्दै**) : म कसरी मात्र सक्छु कि यो घटना आकस्मिक हो

ग्रेगर्स : (**गला सफा गर्नलाई घुटको लाँउदै**) कसैले पनि भन्न सक्तैन, यो दुर्घटना कसरी भयो।

रेलिंड : बारूदले उसको शरीरको जम्मै लुगा जलेकोछ। उसले निश्चय पनि आफ्नो छातीमा ताकेर फायर गरेको हुनसक्छ।

ग्रेगर्स : हेदविग त्यसै व्यर्थमा मरेकी छैन। तिमीले देखेनौ कसरी यो शोकले उसमा भएको मनुष्यतालाई मुक्ति गरिदियो?

रेलिंग : वास्तविक मृत्युको वैराग्यले धेरै जस्तो मानिस साधु बन्दछन् तर कति दिन यो साधुपन उसको मनमा रहन्छ र ?

ग्रेगर्स : तर किन उसको जीवनमा यो सँधै हुँदैन अनि टिक्दैन?

रेलिंग : वर्ष नपुग्दै विचारी सानी हेदविग उसको लागी कोही पनि हुने छैन। तर केवल चर्चा को विषय मात्र बन्नेछ।

ग्रेगर्स : तिमी हजलमार एकदलमाथि यसो भन्नु कसरी साहस गर्दैछौ।

रेलिंग : हामी यस विषयमा फेरि कुरा गर्नेछौ। जब प्रथम पल्ट उसको चिहानमाथि झारपात पलाउनेछ। त्यस पछि उसले यसो भनेको सुन्नेछौ :आफ्नो पिताको हृदयबाट अति चाँड़ैने आफ्नो नानीलाई चुँडेर लग्यो। अनि तिमीले आफै संवेदना, आत्मशान्त्वना र आत्मा करुणामा डुबेको देख्नैछौ, हेरी मात्रै बस न।

ग्रेगर्स : यदि तिमी ठीक र म बेठीक छु भने तब जीवन बाँच्नु निरर्थक छ।

रेलिंग : ओह! जीवन साँच्चै सहनशील छ ! आखिर यो यदि हामी हैरानी को चंगुलबाट उम्कन् सक्यौं भनौ जसले हाम्रो गरीबीमा आदर्शको कुरा गर्दै हामीलाई हैरान पारीरहेछ।

ग्रेगर्स : (**उसलाई एकोहोरो हेर्दै**) यदि उसो हो भने : म मेरो भाग्यमा जो

छ त्यसैमा खुशी छु।

रेलिंग : माफ गर, म सोध्न सक्छु, तिम्रो भाग्यमा के छ?

ग्रेगर्स : (हिँड्दै) गिन्तीमा तेह्रौ हुनु मेरो भाग्य।

रेलिंग : यो कस्तो अपदूत (?) कुरा!

□□□